# गद्दार पुष्पलाल

लेखक :–

आनन्द बहादुर छेत्री



प्रकाशक :

रातो तलवार प्रकाशन
वीरवास, नेपाल

मूल्य ३)-

आफ्नो प्रसिद्ध रचना ''ड्यूहरिङ्ग-मत खण्डन'' मा एङ्गेल्सले ड्यूहरिङ्गको आत्म प्रसंशा प्रति व्यङ्ग हान्दै लेख्नु भएको छ ''उसले आफूलाई वर्तमान तथा ज्ञात भविष्यको एकमात्र सच्चा दार्शनिक घोषणा गर्छ। जस्ले पनि उसको मतलाई मान्दैन, त्यो सत्यबाट टाढा गएको हुन्छ,'' उ आफ्ना सिद्धान्तलाई ''अन्तिम र चरम सत्य घोषणा गर्छ!'' एङ्गेल्सले भन्नुभएको छ कि ''ड्यूहरिङ्ग द्वारा ड्यूह-रिङ्गको आत्म प्रशंसाको यो फूलझरी सजिलै संग दशौं गुना बढाउन सकिन्छ''।

एङ्गेल्सले भन्नुभएको छ कि स्वयं आफ्ना विषयमा नै यस्तो धारणा राख्ने मानिसहरू कमै पाइन्छन्। त्यस्तो अर्को एउटा व्यक्ति नेपालमा देखिएको छ। त्यो व्यक्ति हुनुहुन्छ-श्रीमान पुष्पलाल जी। ऊहाँले स्वयं प्रस्तुत गरेका दस्तावेजहरूमा विना संकोच र कैयौं ठाउँमा सत्यको तोड़मोड़ गरेर यो देखाउने प्रयत्न गर्नु भएको छ कि नेपाल कम्युनिष्ट आन्दोलनमा उहाँ एकमात्र यस्तो व्यक्ति हुनुहुन्छ, जस्ले आज संम कुनै गल्ती गर्नु भएको छैन; उहाँले प्रस्तुत गरेका सिद्धान्तहरू भविष्यसंमको लागि अन्तिम र ''ध्रुव सत्य'' हुन। 'मूलबाटो' मा लेनिनको यो भनाईलाई उद्धृत गरिएको छ, ''कुनै गल्ती नै नगर्ने मानिस न पहिले भए, न हुन नै सक्ने छन्''। ( पृष्ठ ११ ) तर उहाँले आफूलाई लेनिनको त्यो भनाई भन्दा माथि राख्ने प्रयत्न गरेको पाइन्छ-- स्वयंलाई कुनै गल्तीनै नगर्ने मानिसका रूपमा प्रस्तुत गरेर।

कथित नयाँ जनवादी कार्यक्रम * मा लेखिएको छ, ''आज भन्दा २० वर्ष पहिले १५ सेप्टेम्बर १९४९ मा कामरेड पुष्पलालको नेतृत्वमा कम्युनिष्ट पार्टीको गठन भएको हो। त्यसवखत पार्टीको कार्यक्रम नयाँ जनवादी कार्यक्रम नै थियो''। पी. एल. गुट द्वारा प्रस्तुत 'नेपाल कम्युनिष्ट पार्टीको अठार वर्षको क्रान्तिकारी संघर्षको सिंहावलोकन एवं शिक्षा' ** मा लेखिएको छ, ''पार्टीको पहिलो घोषणा-पत्रमा उल्लिखित बूँदाहरु नेपालमा जनवादी क्रान्ति संपन्न न हुन्जेल संम मुख्य

* यसपछि यस दस्तावेजको उल्लेख संक्षिप्तमा 'कार्यक्रम' मात्र भनेर गरिनेछ।

** यस पछि यो दस्तावेजको उल्लेख 'सिंहावलोकन' मात्र भनेर गरिनेछ।

रुपले सहीनै छन् । यो कुरा ध्रुव सत्य छ." ( पृष्ठ १२ ) उहाँले कति चलाकी पूर्वक आत्म प्रशंसा गर्नु हुन्छ ? प्रथम, प्रथम घोषणापत्रका बूँदाहरुलाई भविष्य संमको लागि ध्रुव सत्य बताउनुहुन्छ । दोस्रो, कम्युनिष्ट पार्टीको जन्म उहाँको नेतृत्वमा भएको कुरा बताउनुहुन्छ । तेस्रो, त्यसरी यो घोषणा गर्नु हुन्छ कि भविष्य संम ध्रुव सत्य रहने कार्यक्रमको प्रणेता उहाँनै हुनुहुन्छ ।

उहाँले ने० क० पा० को जुन इतिहास पेस गर्नु भएको छ, त्यसबाट यस्तो देखिन्छ कि नेपालको कम्युनिष्ट आन्दोलन उहाँको व्यक्तिगत कृति हो । 'सिंहाव-लोकन'को रचयिता स्वयं उहाँनै हुनु हुन्छ । स्वयं आफ्नो मुख द्वारा आफ्नो प्रशंसा ! त्यतिले पनि बताउँछ कि उहाँको दृष्टिकोण र सोच्ने तरीका कहाँ संम गैर सर्वहारा र निम्न रहेछ ? यसलाई नेपाल कम्युनिष्ट पार्टीको दुर्भाग्य संझनु पर्छ कि यस्तो विकृत नैतिक धारणा भएका व्यक्तिहरूले पार्टीका शीर्षस्थ नेताहरुको स्थान लिन पुगे । आफ्नो २२ वर्षको लामो इतिहास पछि पनि ने० क० पा० ले देशको राजनीतिमा सफल क्रान्तिकारी भूमिका निभाउन सकेन भने त्यसको कारण यही रह्यो: त्यो यस्ता गलत र विकृत धारणाराख्ने व्यक्तिहरुको प्रभावबाट मुक्त हुन सकेन ।

विरोधीहरुको आलोचना गर्दा उहाँले सिद्धान्त र नैतिकता संबन्धी ठूला-ठूला कुरा गरेको पाइन्छ । तिनै कुराहरुको आधारमा स्वयं उहाँलाई हेर्ने हो भने उहाँको व्यक्तित्वको सही चित्र अगाड़ि आउँछ । उहाँले लेख्नु भएको छ, "कम्युनिष्ट पार्टीमा व्यक्ति प्रधान न भई कमिटि प्रधान हुन्छ र नेता प्रधान न भई नीति प्रधान हुन्छ" ( सिंहावलोकन, पृष्ठ ८३ )। यो कुरा त्यो संगठनको दस्तावेजमा र त्यो व्यक्तिद्वारा लेखिएको छ, जुन संगठनको संपूर्ण ढाँचा नै एउटा व्यक्तिको व्यक्तित्व माथि टिकेको छ। उहाँको अभावमा तथा कथित कम्युनिष्ट पार्टीको ढाँचा नै भत्केर जानेछ। पी. एल. गुटकोलागि नीतिको प्रश्नले भन्दा एउटा व्यक्तिको नामले बढ़ी महत्त्व राख्दछ'। यही कारण हो कि उनीहरुका दस्तावेजहरु पार्टीको नाममा भन्दा व्यक्तिका नाममा प्रचारित गरिएका हुन्छन् ।

विरोधीहरूको आलोचना गर्दै उहाँहरूको एउटा दस्तावेजमा लेखिएको छ, "यी अवसरवादी--संशोधन वादी माझीहरू भन्दा पनि खतरनाक छन्, यस मानेमा माझीहरूलाई इमानदार मान्न सकिन्छ कि उनीहरूले आफ्ना संशोधन वादी विचारधारालाई स्पष्ट रूपमा राखे। तर यी गद्दारहरूले त आफ्ना संशोधन-वादी विचारहरूलाई विभिन्न शब्द जाल भ्रमपूर्ण तरीकाले राख्न सकेका छन्" ( सिंहावलोकन, पृष्ठ ९५ ) नेपाल कम्युनिष्ट पार्टीमा आफ्ना विचारहरूलाई "विभिन्न शब्द जाल र भ्रमपूर्ण तरीकाले" राख्ने बारेमा पी० एल० को बराबरी अरू कसैले गर्न सक्तैन। शायद केही हद संम डी० पी० र उहाँका बिचमा तुलना

हुन सक्छ। तर जहाँसम्म पहिलाको प्रश्न छ, उहाँ आफ्ना तर्क र शब्द जालमा स्वयं अलमलिनु हुन्छ तर दोश्राले अरूलाई पनि अलमल्याउने क्षमता राख्नुहुन्छ। उहाँका दस्तावेजहरूबाट यो कुरा स्पष्ट हुनेछ।

'सिहावलोकन'मा लेनिनको चर्चा गर्दै लेखिएको छ, "कम्युनिष्टहरूले आफ्नो गल्ती कुनै पनि हालतमा लुकाउँदैनन्" ( पृष्ट ११४ )। तर के स्वयं उहाँले नै यो सिद्धान्तको अलिकति पनि पालन गर्नु भएको छ ? यस सिलसिलामा एउटै कुराको उल्लेख गर्नु पर्याप्त हुने छ। दरभङ्गा प्लेनम तथा वनारस महाधिवेशनमा उहाँले 'विघटित संसदको पुनः स्थापना' को नारा पेश गर्नु भएको थियो। त्यो सही भएको भए त्यसका पक्षमा र गलत भएको भए आत्मालोचना गरेर उहाँले त्यो विषयलाई अगाडि ल्याउनु पर्दथ्यो, तर स्वयं उहाँले लेखेको इतिहासमा त्यसको कहीं कुनै चर्चा छैन। त्यो यो कुराको प्रमाण हो कि उहाँको बानी गल्ती लुकाउने नै छ, "निर्भिकता पूर्वक" जन समक्ष ल्याउने होइन, यस्ता दर्जनौ उदाहरणहरू पाइन्छन्। टी. एल. वारे उहाँले लेख्नुभएको छ, "तुलसीलाल जी आफ्नो गल्ली प्रति आत्मालोचक भै आउनको साटो उल्टो झुटो कुरा बोल्छन्," ( सिंहावलोकन पृष्ट ४४ )। तर के स्वयं उहाँले 'आफ्नो गल्ती प्रति आत्मालोचक' भएको एउटा पनि उदाहरण दिन सक्नु हुन्छ ?

**उहाँसित मतभेद राख्ने साथीहरुको आलोचना गर्दै उहाँले लेख्नु भएको छ, "उनीहरुले जनवादी प्रजातन्त्रको नाममा जुन कार्यक्रम प्रस्तुत गरे, त्यसको एकमात्र मकसद मार्क्सवादी–लेलिनवादी कार्यकर्ताहरुलाई छद्मभेषी रुपवाट धोका दिई संशोधनवादी वाटोमा डोराउन खोज्नु हो" ( सिंहावलोकन, ४८ पृष्ठ ) यो कुरा सर्वप्रथम उहाँकै वारेमा लागु हुन्छ। वेग्ला वेग्लै साथीहरुले 'कुण्ड कुण्ड पानी मुण्ड मुण्ड बुद्धि' भने झैं वेग्ला वेग्लै कार्यक्रमहरू निकालने काम सर्व प्रथम उहाँ हरुवाट नै शुरु भयो। खालि छ जनाले व्यक्तिगत प्रकारले कार्यक्रमको मस्यौदा निकाल्नुलाई अरु के भन्न सकिन्छ ?**

तुलसीलाल र माझीहरुका बीचको तुलना गर्दै लेखिएको छ, "संगठनात्मक रुपमा आज तुलसीलालहरू र माझीहरू एक अर्कोबाट अलग भए तापनि मानसिक रुपवाट उनीहरू सबै एकै ड्याङ्का मूला हुन" ( सिंहावलोकन, पृष्ठ ४२ )। रयही कुरा घुम्दै आएर आज पी. एल. बारे सत्य हुन गएको छ। सबै प्रमुख विषयहरुमा उनीहरुका धारणाहरू मूलत समान छन्। ने. का. को वर्ग विश्लेषण, उसित संयुक्त मोर्चाको प्रश्न राष्ट्रीयता, प्रजातन्त्र, कथित वंगलादेश, मुख्य दुश्मनको प्रश्न आदि सबै वारे दुबै थरको सोंचाई एकै छ। यही कारण हो कि बो. पी. कोइरालाले उनीहरु दुवै थर ( माझी र पी. एल. ) लाई प्रजातान्त्रिक मानेर दुबैसित एकता संभव छ भनेका छन् ( क्रान्ति एक अनिवार्यता – बी. पी.

कोइराला पृष्ठ ४५ )। त्यो भनाईले पनि बताउँछ कि आज ऊनीहरुका बीचको अन्तर "संगठनात्मक" मात्र भएको छ, जब कि 'मानसिक' रुपमा दुवैने "एकै ड्याङ्का मूला हुन"।

आजको अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनमा उत्पन्न भएको "संशोधनवाद" का विषयमा हाम्रोपार्टीले विधिवत छलफलगरी एउटा निष्कर्ष न निकाल्नुलाई उहाँले गंभीर प्रकारको गल्ती वताउनुभएको छ ( सिंहावलोकन, पृष्ठ ९० )। तर स्वयं उहाँ नै त्यस्तो गंभीर सैद्धान्तिक प्रश्नमा तटस्थ रहने गरेको पाइन्छ। तृतीय महाधिवेशनको वेलासंम राष्ट्रिय प्रजातन्त्र तथा जनवादी प्रजातन्त्र संबन्धी विवाद अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनमा स्पष्ट रूपले अगाडि आई सकेको थियो। स्वयं भारतीय कम्युनिष्ट पार्टी भित्र पनि त्यस संबन्धी विवाद र बेग्ला-बेग्लै दस्तावेजहरू अगाडि आइसकेका थिए। त्यो अवस्थामा नयाँ जनवादी कार्यक्रम तृतीय महाधिवेशनमा पेश हुनु पर्थ्यो र त्यसमा तटस्थ रहनु अवसरवाद नै हुन्थ्यो। तर उहाँले, जस्ले शुरू देखिनै नयाँ जनवादको पक्ष लिंदै आएको आधारहीन दावा गर्नु हुन्छ, त्यो बेला नयाँ जनवादको पक्षमा चुइंक्क संम वोल्नु भएन। त्यसका पक्षमा कुनै प्रस्ताव वा दस्तावेज पेश गर्ने कुरा त धेरै टाढाको कुरा हो। त्यति मात्र होइन, जस्तो 'सिंहावलोकन'मा लेखिएको छ, "तेश्रो महाधिवेशनमा तत्काल नयाँ कार्यक्रम र कार्य नीतिको वहस न उठाउनको निम्त कामरेड पुष्पलालले अन्तिम समय संम पनि प्रयास गर्नु भएको हो" ( पृष्ट ६३ )। अगाड़ि लेखिएको छ, "पार्टी महाधिवेशनको तैयारी देखिनै हामीहरूको तर्फबाट आज कार्य-क्रमिक प्रश्नहरू न उठाई अनावश्यक विवाद थाति राखि कार्य नीतिमा एकमत रहेर जाने प्रयत्न रहेको हो।" ( उही, पृष्ठ ४३ )

यसरी उहाँले विश्व कम्युनिष्ट आन्दोलनमा उत्पन्न भएको त्यति महत्त्वपूर्ण विवादलाई "अनावश्यक विवाद" ठहराएको कुरा स्वयं उहाँकै दस्तावेजबाट सिद्ध हुन्छ। कार्यक्रमको प्रश्नमा तटस्थ रही कार्य नीतिको प्रश्नमा एकमत भएर जाने सोंचाई नाङ्गो प्रकारको अवसरवाद नै हो ( उहाँले एका तिर कार्यनीतिको प्रश्न-मा एकमत भएर जाने कुराको उल्लेख गर्नुभएको छ भने, अर्कोतिर नयाँ कार्यक्रम र कार्य नीति दुवैको "वहस न उठाउन" जोड गर्नु भएको छ। आखिर उहाँले एकमत हुन भनेको कार्य नीति कुन हो र वहस न उठाउन भनेको कार्य नीति कुन हो ? )। त्यसका पछाड़ि विशेष स्वार्थले काम गरेको थियो। त्यो वेला भारतीय कम्युनिष्ट पार्टीमा डागेहरू नै वहुमतमा थिए। नयाँ जनवादको प्रश्न उठाउनुको सीधा अर्थ उनीहरूको अनुग्रहवाट बन्चित हुनु हुन्थ्यो। पी. एल. मा यति नैतिक साहस थिएन कि उनीहरूको कृपाबाट वंचित हुने खतरा उठाएर पनि सिद्धान्तको पक्ष लिउन्। खालि डाँगेहरूले स्पष्टत: माझी र टी. एल. हरूको पक्ष

लिए पछि मात्र उहाँले नयाँ जनवादको सिद्धान्तको पक्ष लिनु भयो। सिद्धान्तको प्रश्नमा संझौता गर्ने वा वहुमतको निर्णयलाई मान्ने कुरा आउँदैन। त्यही सिद्धान्तको प्रश्न—राष्ट्रिय प्रजातन्त्र वा नया जनवाद ?—मा विश्वका पार्टीहरू दुई क्याम्पमा बाँडिदै गैरहेका थिए। तर वहाँले तृतीय महाधिवेशन द्वारा पारित कार्यक्रम, जस्लाई आफ्नो कार्य क्रममा उहाँले संशोधनवादी वताउनु भएको छ, वारे 'मूलवाटो'मा पनि लेख्नुभएको छ, 'जव संम पार्टीमा यो विवाद (अन्तर्राष्ट्रिय सैद्धान्तिक विवाद संवन्धी) टुङ्गो लाग्ने छैन, तव संमको निम्ति तेस्रो महाधिवेशनले दिएको कार्यक्रम नैं हाम्रो लक्ष अर्थात 'Strategy' हुने छ।" (पृष्ट १२) तृतीय महाधिवेशन पछि पनि "भोट भै सके पछि अल्पमतले वहुमतको फैसला मानी काम गर्न तयार भए"। (सिंहावलोकन, पृष्ट ६३-४) सामान्य अवस्थामा लागु हुने यी कुराहरू अन्तरराष्ट्रिय कम्युनिष्ट आन्दोलनको विशेष प्रकारको पृष्टभूमिमा सही हुन सक्तैन थे।

'तेश्रो सम्मेलनको ऐतिहासिक महत्त्व' मा स्पष्ट रुपमा भनिएको छ, "अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनमा सैद्धान्तिक मतभेदको प्रश्न आज मात्र उठेको होइन .... .... प्रत्येक पल्ट सैद्धान्तिक मतभेद उठदा पक्ष-विपक्षको साथै एक तटस्थतावादी गुट पनि हमेशा नै देखा पर्दै आएको छ। त्यो तटस्थतावादी गुट अन्तमा गई संशोधनवाद तथा अन्धराष्ट्रवादको दल-दलमा फँस्न गएको छ।" (पृ. १७३) कुनै दिन "तटस्थतावादीगुट" को विरोध गर्ने पी. एल. आज पुनः त्यसैमा सामिल हुदै गइरहनु भएको छ। भारतीय मार्क्सवादीहरु अर्थात् ज्योतिवसु-नम्वुदरीपाद गुटले त्यही वाटो समाते को छ। त्यसैले गुट "अन्तमा गई संशोधनवाद तथा अन्धराष्ट्रवादको दलदलमा फँस्न गएको छ।" त्यही पी. एल. गुट ले पनि गर्दै छ।

पी. एल. गुटको कार्यक्रममा लेखिएको छ, "आजको युगमा अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनमा मार्क्सवाद-लेनिनवादको सुद्धताको रक्षा का. माओको नेतृत्वमा चीनी कम्युनिष्ट पार्टीले नवसंसोधनवाद विरोधी अभियान चलाई विश्वका कम्युनिष्ट क्रान्तिकारीहरुलाई ......... पथप्रदर्शन गर्ने कार्य भएको छ" (पृ ७) यसरी उहाँले पहिले संशोधनवाद विरोधी अभियानमा माओको नेतृत्वमा चीनको पार्टीको ऐतिहासिक भूमिका रहेको कुरा स्वीकार गर्नुभएको छ, तर अव उहाँले चीनको पार्टीको विशिष्ट र ऐतिहासिक भूमिकालाई क्रमशः अस्वीकार गर्दै गैरहनु भएको छ। भारतीय कम्युनिष्ट पार्टी (रणदिवे गुट) ले आफ्नो नवौं महाधिवेशनमा पारित राजनीतिक प्रस्तावमा, "चीनको कम्युनिष्ट पार्टीलाई सोभियतसंघको कम्युनिष्ट पार्टीको समकक्षमा राखेर दोषारोपण गरेको छ।" त्यसमा लेखिएको छ, "आफ्नो परराष्ट्र नीतिका अल्पकालीन आवश्यकताहरुको पूर्ति-

कोलागि तिनीहरु ( चीन र सोभियत संघ ) ले मजदूर र कम्युनिष्ट पार्टीहरू माथि यस्ता नीतिहरू लाद्छन्, जस्ले गर्दा उनीहरू संबन्धित पूँजीवादी राज्य-हरूका पिछलग्गु र सहयोगी बन्न जान्छन् ।'' (Frontiar August 19,072) यो कुरा ती नामधारी मार्क्सवादीहरुले गर्दछन्, जो स्वयं भारतको प्रतिक्रियावादी सरकारका पिछलग्गु र सहयोगी बन्न पुगेका छन् । अब पी. एल. गुटले तिनीहरू सित नै आफ्नो संबन्ध जोडेको छ । त्यसकारण आफ्ना गुरुहरुको बाटो उनीहरु पनि ( पी एल. गुट ) समात्दै गइ रहेका छन् । आज स्वयं उनीहरुको पार्टी भित्र माओको विचार धारा ''अत्यधिक जनप्रिय'' छ, त्यसैले एकै पल्ट माओ विचार धारालाई तिलाञ्जली दिनु वा चीनको पार्टीको विरोध गर्नु उनीहरुका लागि संभव छैन । तैपनि आज त्यसकालागि क्रमशः माथिवाट वतावरण तयार पार्दै लगिएको छ । त्यसरी उनीहरू कुनै दिन स्वयं प्रकट गरेका विचारहरुका विपरीत क्रमशः तटस्थता र अन्धराष्ट्रवादी गुटमा सामेल हुँदै गइ रहेका छन् । अर्का शब्दमा, कुनै दिन देश भित्र इलाकावाद र तटस्थतावादको धिरोध गर्ने पी. एल. गुट स्वयं नै विश्व कम्युनिष्ट आन्दोलनमा, 'इलाकावाद र तटस्थतावाद' को शिकार वन्दै गै रहेको छ ।

— २ —

मनोहन र शंभुरामले जेलवाट छुट्दा जुन बक्तव्य दिनु भयो, त्यसकालागि पी. एल. ले उनोहरुको निकै आलोचना गरेको पाइन्छ । उनीहलाई आत्मसमर्पण-वादी, राजावादी र गद्दार भनिएको छ । उहाँहरुको त्यो कदमलाई हामीले पनि समर्थन गर्दैनौं र त्यसका पक्षमा वकालत गर्ने जिमा हामीहरुले लिन्नौं । तर त्यो बक्तव्य, जस्लाई वहाँले पनि धेरै आलोचना गरेको पाइन्छ, का प्रकाशमा स्वयं उहाँलाई हेरौं । त्यो वक्तव्यको सारतत्व यो हो कि, प्रथम, राजाका आर्थिक र वैदेशिक नीतिहरूको समर्थन गरिएको छ; दोश्रो, व्यवस्थालाई 'जीवित वास्तविकता'को रूपमा स्वीकार गरिएको छ, जस्को अर्थ हुन्छ—वर्तमान ब्यवस्था विद्यमान छ भनेर स्वीकार गर्नु । उक्त कुराहरूलाई स्वीकार गर्ने विषयमा स्वयं पी० एल० पनि उहाँहरू भन्दा पछाड़ि होइन, वरू केही अघि नै हुनुहुन्छ । 'मूलबाटो' मा उल्लिखित तलका भनाईहरूबाट त्यो स्पष्ट हुन्छ : *राजाले ''नेपालमा भारतीय एकाधिकारको स्वार्थको विपरीत काठमाण्डौं—कोदारी राज-मार्गको निर्माण, पाकिस्तानसंग दौत्य संबन्ध, पूर्व पश्चिम राजमार्ग, आदि कुरा-हरू, जुन ती हाम्रो राष्ट्रीय स्वार्थको अनुरूप पनि छन्, जोड तोड़ सँग उठाउनुका साथै कार्यान्वित गर्ने वाटोतिर पनि लागे'' । ( पृष्ठ ३० ) * राजाले ''आफुलाई भूमिपति वर्गको दूरदर्शी नेताको रूपमा सवित गर्दै छन्'' । ( पृष्ठ ४२ ) *''आर्थिक क्षेत्रमा पुरानो सामन्ती मध्ययुगीन सामन्ती व्यवस्थालाई नै कायम

राख्ने पक्षमा राजाको नीति छैन"। ( पृष्ठ ४३ ) *"आज देशमा मौजूद भएको राष्ट्रीयता, सार्वभौमिकता, प्रजातन्त्रको भावना र समाजवादी राष्ट्र समूहको जुन प्रभाव नेपालमा छ, त्यसको दबावबाट राजा पूर्णत: मुक्त छैन, न त उनी यी सत्यहरू प्रति आँखा चिम्लन नै सक्छन्, त्यसको प्रत्यक्ष प्रतिविम्व नेपालको तटस्थ वैदेशिक नीति र समाजवादी राष्ट्रहरूसँग भएका आर्थिक, राजनैतिक, साँस्कृतिक आदि सन्धी तथा संझौताइरूमा हामी पाउछौं"। ( पृष्ठ ४४ ) *"नेपालमा चाहे राजा रहोस् वा न रहोस् काठमाण्डू कोदारी राज मार्ग अमर रहने छ"। ( पृ० ४५ ) * "प्रजातान्त्रिक आन्दोलन जति बढ्ने छ, उती नै मात्रामा शासक वर्ग माथि जनताको दबाव पर्ने छ र जति मात्रामा जन दबाव बढ्ने छ उतो नै मात्रामा हाम्रो देशको वैदेशिक नीति सुदृढ हुने छ।........राजाको आर्थिक तथा वैदेशिक नीति प्रति यही नै हाम्रो दृष्टिकोण हुनुपर्छ। ( अर्थात् जनवाद बढाएर त्यसलाई सुधार्ने प्रयत्न गर्ने—लेखक ) ०७ साल देखि नेपालमा विभिन्न सरकार गठन हुँदा पनि हाम्रो पार्टीको नीति मूलत: यही नै थियो, आज पनि हाम्रो नीति यही नै हुनुपर्छ।" ( पृष्ट ४६-७ )

* "जहाँसंम राजाको आर्थिक तथा वैदेशिक नीति छ, ०७ साल देखि यता एक पछि अर्को गठन भएका विभिन्न सरकारहरूले अपनाउँदै आएका नीतिहरूसंग मूलत: भिन्न न भै मात्रामा केही फरक देखिन्छ।" ( पृ० ४७ )

मनमोहनहरूले पी० एल० ले माथि भनेका कुराहरू भन्दा कमै भन्नुभएको छ, बढ्ता होइन। जहाँसंम आर्थिक र वैदेशिक नीति र जनवादद्वारा त्यसमा सुधार ल्याउने प्रयत्नको प्रश्न छ, उहाँले ०७ साल पछिका सरकारहरू र वर्तमान व्यवस्थामा मूलत: समान नैं देख्नु हुन्छ। ०७ साल पछि कायम भएका सरकारहरू र पंचायती सरकारमा मूलत: समानता नै छ, अन्तर मात्राको नै हो। तर उहाँको समझदारीमा गल्ती यती मात्र छ कि यो समानमा खालि आर्थिक र वैदेशिक विषय संम सीमित छैन।

मनमोहन र पी० एल० हरूको विचारमा दुवै थरको जुन भिन्नता देखिन्छ, त्यो मूलत: भाषाको अन्तरमात्र हो। पंचायती व्यवस्थाका आर्थिक तथा वैदेशिक नीतिहरू प्रति समर्थन जनाएर उहाँले ( पी० एल० ले ) वास्तवमा पंचायती व्यवस्थालाई पनि जीवित सत्य ( Living Reality ), अर्थात् विद्यमान सत्यका रूपमा स्वीकार गर्नु भएको छ। स्वयंले त्यसो गर्दा गर्दै अरूको त्यस्तो विचारको निन्दा गर्नु कति निम्न स्तरको कुरा हो ?

मनमोहनका वक्तव्यमा उल्लिखित "श्री ५ महेन्द्रबाट आफ्नो शासनकालमा खास गरिकन देशको अन्तर्राष्ट्रिय प्रतिष्ठा बढाउन जुनयोगदान भएको छ" भनाईलाई पी०

एल० ले "राजतन्त्र प्रतिको आत्मसमर्पणको बाटो" तथा "गद्दार माझीहरूले अख्त्यार गरेको बाटो" भन्नुभएको छ। (नयाँ जनवाद बुलेटिन नं० ५, पृष्ठ ७६) तर त्यो बाटो त्यसभन्दा पहिले नै स्वयं पी० एल० ले अख्तियार गरेको बाटो हो। "मूलबाटोमा लेखिएको छ", "साम्राज्यवादी राष्ट्र समूह र समाजवादी राष्ट्र समूहका बिच अन्तर द्वन्दमा सन्तुलन रूपले खेल्न खोजी आफ्नो स्वतन्त्र अस्तित्व जोगाउन उनी ( राजा ) चाहन्छन्.........हिन्दुस्तान र पाकिस्तानको संघर्षमा तटस्थ रहन्छन्......अफ्रो एशियायी सम्मेलनमा सोभियतसंघको प्रतिनिधित्वको प्रश्न उठाउँदा उ चीनको साथ दिन्छ.........संयुक्त राष्ट्रसंघको सदस्य भएको हुँदा अन्तर्राष्ट्रिय क्षेत्रमा पनि नेपाललाई अरु सरह नै एक भोट प्राप्त छ, यसले पनि नेपालको मानलाई उठाएको छ र नेपालको तर्फबाट चाहे कसैको ( यहाँ स्पष्टत: राजालाई संकेत गरिएको छ—लेखक ) मुखबाट वोलिने बोलीले आज अन्तर्राष्ट्रीय क्षेत्रमा महत्त्व राख्दछ।" ( पृ. ४५ ) यो र माथि उद्धृत भनाईहरुबाट पी. एल. ले पनि "राजाले अन्तर्राष्ट्रीय क्षेत्रमा प्रतिष्ठा वढाउन योगदान" गरेको कुराको प्रचार गर्नु भएको छ। ती भनाईहरुवारे उहाँले अहिले संम कुनै आत्मालोचना गर्नु भएको छैन। के 'मूलबाटो' लुकाउँदैमा उहाँले राजा र व्यवस्थाका समर्थनमा भनेका ती सबै कुरा हरू लुक्छन् र ? पहिले राजा र व्यवस्थाका पक्षमा त्यस्ता विचारहरू प्रकट गरेर उनको ( महेन्द्रको ) मृत्यु पछि "नेपालको सामन्तवादी इतिहासमा यस्ता कैयौं राजा जन्मदै-मर्दै गैरहेका छन्" भनेर माझी र मनमोहन द्वारा भन्दा आफुलाई बीर सावित गर्ने प्रयत्न साँच्चिकै हास्यास्पद कुरा हो।

'कार्यक्रममा, लेखिएको छ, "तेस्रो सम्मेलन नेतृत्त्व हत्याउनको निम्ति गरिएको पार्टीको कार्य क्रम ठीक छ, तर नेतृत्त्व ठीक भएन भन्ने झुठा प्रचार गर्दछन्"। ( भूमिका ) वास्तवमा सत्य कुरा पहिलो चाही हो—तेस्रो सम्मेलन "नेतृत्व हत्याउन" तथा कांग्रेस परस्त पार्टीको गठनको लागि नै गरिएको थियो। त्यस सत्यमाथि पर्दा हाल्न उहाँले एउटा अर्को असत्यको कल्पना गर्नुभएको छ "कार्यक्रम ठीक छ" भन्ने प्रचार गर्छन् भन्ने आत्म प्रसंसाको यो एउटा अर्को उदाहरण हो। त्यो भनाईवाट यस्तो भान हुन्छ, मानौं कथित नयाँ जनवादी कार्यक्रममा लेखिएका सबै बूंदाहरू ध्रुव सत्य छन् र त्यस प्रति कसैको पनि विरोध छैन। उहाँसित मतभेद राख्ने साथीहरुको मतको त्यसरी प्रतिनिधित्व गरेर बोल्ने अधिकार उहाँलाई कहिले, कहाँ र कले दियो ?

वास्तवमा प्रस्तुत 'कार्यक्रम' नयां जनवादी कार्यक्रम नै होइन। यो पूंजीवादी र संशोधनवादी कार्यक्रम हो। त्यसलाई ढाक छोप गर्नाका लागि मार्क्सवाद लेनिनवादका क्रातिकारी विचारहरुको जुन चर्चा गरिएको छ, त्यसलाई हटाएर

हेर्ने हो भने हामीले पाउने छौं कि त्यहाँ पूँजीवादी प्रजातन्त्रलाई नै सही सिद्ध गर्ने प्रयत्न गरिएको छ। लेनिनले गद्दार काट्स्कीको यही प्रकारको घृणित चालको भण्डाफोर गर्दै लेख्नु भएको छ "जब काट्स्कीले मध्ययुगिन व्यवस्थाका तुलनामा पूँजीवादी प्रजातन्त्र प्रगतिशील हो भनेर 'प्रमाणित' गर्न र सर्वहारा वर्गले पूँजीपति वर्गका विरूद्धको संघर्षमा यसलाई अलिकति लापर्वाही न गरी कन उपयोग गर्नु पर्छ भनेर दर्जनौं पृष्ट लेख्तछन्, त्यो वास्तवमा मजदूरहरुलाई मूर्ख बनाउन गरिएको उदारवादी वकवाद हो।"

उहाँले अगाडि लेख्नु भएको छ "काटस्कीले मार्क्सवाट त्यही कुरा लिन्छ, जो उदारवादीहरूलाई, पूँजीवादहरूलाई मंजुरछ, (मध्ययुगको आलोचना र सामन्यतः पूँजीवादको र विशेषतः पूँजीवादी प्रजातन्त्रको प्रगतिशील ऐतिहासिक भूमिका) र यी सबै कुरा जो पूँजीपति वर्गलाई नामंजुर छन् (पूँजीपति वर्गको विनाशको निति सर्वहारावर्गको क्रन्तिकारी हिंसा) लाई चुपचाप सित छाडी दिन्छन्। त्यस कारणले वस्तुगत रुपमा काट्स्कीको स्थिति तथा आत्मगत रुपमा उसका मान्यताहरू जे सुकै होउन् उ अनिवार्यतः वुर्जुवाको पिछलग्गु प्रमाणित हुन्छ।"

(Proletarion revolution, and Renegade Kautsky collected Vol. 28, Page 243)

ठीक त्यही पी. एल. ले गर्नु भएको छ। उहाँले 'सिंहावलोकन' को प्रारंभ नै पूजीवादी-जनवादी क्रान्ति संबन्धि लेनिन र माओका उद्धरणहरुवाट शुरु गर्नु भएको छ र त्यसका आड़मा आफ्नो "उदारवादी वकवाद" लाई छिपाउने प्रयत्न गर्नु भएको छ। त्यसका पछाड़िको उहाँको उद्देश्य यो देखिन्छ-पूँजीवादी प्रजातन्त्रको श्रेष्ठतालाई सावित गर्ने प्रयत्न गर्नु। अर्का शब्दमा कथित पंचायती प्रजातन्त्रको तुलनामा कांग्रेसी प्रजातन्त्रलाई प्रगतिशील देखाउने प्रयत्न गर्नु। काट्स्कीले झैं उहाँले प्रधान रुपमा तिनै कुराहरु माथि जोड दिनु भएको छ, जुन ने० का० लाई मंजूर छन् (पंचायती प्रजातन्त्र र राजतन्त्रको आलोचना)। ती कुराहरुलाई छाडि दिनु भएको छ, जो ने० का० लाई आपत्तिजनक छन् (भारतीय एकाधिकारको तीव्र विरोध र भण्डाफोर)। यसरी उहाँको वस्तुगत स्थिति तथा आत्मगत मान्यता जे सुकैहोस्, उहाँ अनिवार्यतः ने. का. को पिछलग्गु बन्न पुग्नु भएको छ।

उहाँले लेख्नु भएको छ, "आज पार्टीमा उत्पन्न भएको सैद्धान्तिक मतभेदलाई गंभीरता पूर्वक विचार न गरी 'यो केवल नेताहरुको नेतृत्वको निति भएको झगड़ा हो—यसवाट हामी तटस्थ वस्नु पर्छ, भन्ने बहानामा छद्मभेषी संशोधनवादीहरु आफ्नो गुट तयार पार्दैछन्। उनीहरूको यस्तो कुचालले गर्दा आज पार्टीमा इलाकावादी मनोवृत्ति बढेर आएको छ!" (सिंहावलोकन पृ. ९८) सैद्धान्तिक विवाद-

मा तटस्थ रहनु गंभीर रूपले गलत कुरा हो, जुन कुरा तृतीय महाधिवेशनको वेलामा स्वयं उहाँले नै गर्नु भएको थियो र जस्कालागि उहाँ सावित हुनु हुन्छ। तर नेतृत्वकोलागि चल्ने सिद्धान्तहीन झगड़ाबाट कोही तटस्थ रहन्छ भने त्यस-लाई अनुचित भन्न सकिन्न। टी० एल० र पी० एल० का विचमा चल्ने झगड़ा त्यस्तै थियो। फलतः धेरै साथीहरू तटस्थ वनेर कुनै गुटमा सामेल भएनन्। जसलाई उहाँले वारम्बार इलाकावादको नामले उल्लेख गर्नुहुन्छ, त्यो वास्तवमा इलाकावाद होइन। तृतीय महाधिवेशन द्वारा निर्वाचित केन्द्रको विघटन तथा नया वामपन्थी केन्द्रको अभावमा नैं पहिलेका इलाकीय कमिटिहरूको काम आ-आफ्नो स्थानमा सीमित रहन गयो। पी० एल० र टी० एल० दुवै गुटका नाम धारी केन्द्रबाट अलग रहनु नै तटस्थतावाद वा इलाकावाद होइन।

– ३ –

प्लेखानोभ प्रथम रूसी मार्क्सवादी थिए, उनी रूसी समाजवादी आन्दोलनको जन्मदाता नै मानिन्छन्। पछि उनी दक्षिण पन्थी र अवसरवादी पक्षमा मिले। उनको त्यस प्रकारको भटकावको कारण थियो, "साम्राज्यवादको नयाँ युगको विशेषतालाई बुझ्न उनको असमर्थता"। त्यसको अर्को कारण थियो, "लामो समय सम्म निर्वासित जीवन विताउनु, रूसी क्रान्तिकारी आन्दोलनबाट अलग रहनु जस्ले गर्दा उनले पाश्चात्य सामाजिक प्रजातन्त्रका क्रान्तिकारी संघर्षका सकारात्मक अनुभव मात्र ग्रहण गरेनन्, तर द्वितीय अन्तर्राष्ट्रिय, जोसित उनको घनिष्ट संवन्ध थियो, का दोषहरू पनि ग्रहण गरे" र सबै कारणले गर्दा उनी मार्क्सवाद देखि "विमुख" हुन गएका थिए।

[ Preface Fundamental Problems of marxism. by Plekhanov. P. 8 ]

पी० एल० लाई प्लेखानोभको नेपाली कार्टून मान्न सकिन्छ। उहाँका बिचार-हरू १९ सौं शताब्दी, बढ़ी भन्दा बढ़ी रूसी क्रान्तिको वेला भन्दा अगाड़ि बढन सकेका छैनन्। फलतः आजको विश्वको परिस्थितिमा उहाँ मार्क्सवाद लेनिनवादलाई सही किसिमले बुझ्न र त्यसको प्रयोग गर्न असमर्थ हुनुभएको छ। उहाँले आजको विश्वको बदलिएको परिस्थितिमा पूंजीवादी प्रजातन्त्रको स्वरूपमा आएको मौलिक परिवर्तनलाई बुझ्न सकी रहनु भएको छैन। देशको परिस्थितिसंग जीवित संपर्कको अभाव, भारतको पूजीवादी, संशोधनवादी तथा अन्धराष्ट्रवादी राजनीति-को असरले उहाँको सोचाईलाई विल्कुल अवास्तविक बनाइदिएको छ। उहाँको मार्क्सवाद-लेनिनवाद र माओको विचारको व्याख्या करीव-करीब यान्त्रिक र किताबी प्रकारको छ र त्यसको सृजनात्मक प्रकारले प्रयोग गर्ने क्षमताको उहाँमा एकदम कमी पाइन्छ।

पहिले पूजीवादी प्रजातन्त्रिक क्रान्ति भन्नाले मुख्यतः सामन्तवाद विरोधी क्रान्ति नै आउँथ्यो। तर आज कुनै पनि देशको जनवादी क्रान्ति त्यो वेला संम सफल हुन सक्दैन, जब संम त्यो साम्राज्यवादको विरुद्ध पनि लक्षित हुदैन। सिद्धान्ततः उहाँले यस कुरालाई स्वीकार गर्न सक्नुहुन्न। यो कुरा अब यति धेरै मान्य भै सकेको छ कि आफूलाई मार्क्सवादी बताउने कुनै पनि व्यक्तिले त्यसलाई अस्वीकार नै कसरी गर्न सक्दछ ?

प्रत्यक्ष रूपले त्यो कुरालाई अस्वीकार गर्न न सके पनि अप्रत्यक्ष रूपले त्यसको साम्राज्यवाद विरोधी पक्षलाई उपेक्षा गर्ने नै प्रयत्न गरेको पाइन्छ। मार्क्स वा लेनिनलाई संशोधनवादीहरूले आफना उद्देश्यहरूको पूर्तिको लागि सधैं उपयोग गर्दै आएका छन् र त्यही उहाँले पनि गर्नु भएको छ। "अठार वर्षको सिंहालोकन" मा उहाँले लेनिनको यो उक्तिलाई उद्धृत गर्नु भएको छ, "पूँजीवादी क्रान्ति स्पष्ट रूपबाट यस्तो क्रान्ति हो जस्ले सुसंगठित किसिमबाट अतीतका अवशेष (जस्मा एकतंत्रीय मात्र न भई राजतन्त्र पनि हुन्छ) लाई खतम गर्नेछ।" (पृ० ४) आजको युगमा पूँजीवादी क्रान्ति भनेको "अतीतका अवशेष" वा राजतन्त्रका विरुद्ध मात्र चलाइने क्रान्ति होइन। लेनिन ले त्यो वेलाको परिस्थितिमा प्रकट गरेको विचारलाई आजका विश्वका विशेषता हरुको उल्लेख नगरिकन उद्धृत गरेर उहाँले वास्तवमा पूँजीवादी प्रजातांत्रिक क्रान्तिको साम्राज्यवाद विरोधी पक्षबाट ध्यान हटाउने नै प्रयत्न गर्नु भएको छ।

एo आईo सोभोलेभले आफ्नो किताबमा लेख्नु भएको छ, "खालि साम्राज्यवाद विरुद्ध चलाइने पुरानो प्रकारको पूँजीवादी प्रजातांत्रिक क्रान्तिहरूको युग निश्चित रूपले विति सकेको छ। वर्तमान कालमा कुनै सामान्य प्रजातांत्रिक क्रान्ति त्यो बेला नै संभव हुन्छ, जब त्यो साथ-साथै सामन्तवाद विरोधी र साम्राज्य विरोधी पनि हुन्छ। [ A. I. Sovolev, People's democracy, A new form of Political organisation of sociaty, Moscow 1954, P. 38 ]

रूसको १९०५ को क्रान्तिको तुलनामा चीनको क्रान्तिको प्रकृतिको चर्चा गर्दै स्तालीनले भन्नु भएको छ, "त्यसमा यो अन्तर हुने छ कि त्यो (चीनको क्रान्ति) प्रधानतः साम्राज्यवादी शक्ति विरोधी हुने छ"। ( उही, पृष्ट ७२ )

उहाले यो तथ्यलाई ठीक सित वुझ्न सक्नु भएको छैन कि आज पूँजीवादी प्रजातन्त्र वा संसदीय प्रजातन्त्रले प्रतिक्रियावादी रूप ली सकेको छ। गत कालमा झैं सामन्त र मध्य-युगीन अवस्थाका विरूद्ध प्रगतिशील भूमिका खेल्न सक्ने यसको क्षमता खतम भइसकेको छ। लेनिनले लेख्नु भएको छ, "पहिलेको प्रगतिशील पूजीवाद प्रतिक्रियावादी भइसकेको छ"। उहाँले यो पनि स्पष्ट गर्नुभएको छ "राजनैतिक किसिमले साम्राज्यवाद प्रजातन्त्रबाट राजनैतिक प्रतिक्रियावादमा

परिवर्तन हो, प्रजातन्त्रले औद्योगिक पूँजीवादसंग मेल खान्थ्यो, जब कि राजनैतिक प्रतिक्रियावादले एकाधिकार पूँजीवादको युगसित मेल खान्छ'' ( उही, पृष्ट २५ )। यसरी स्वयं लेनिनको भनाईले पनि प्रष्ट हुन्छ कि आज पूजीवादी वा संसदीय प्रजातन्त्रले ''राजनैतिक प्रतिक्रियावाद'' को रूप ली सकेको छ।

माओले लेख्नु भएको छ, ''पश्चिमी पूँजीवादी सभ्यता, पूँजीवादी प्रजातन्त्र र पूँजीवादी गणतन्त्रका निमित्त योजनाको अब चीनिया जनताका दृष्टिकोणमा कुनै महत्व रहेको छैन, पूजीवादी प्रजातन्त्रको ठाऊँ मजदूर वर्गको नेतृत्वमा जनवादी प्रजातन्त्रले ली सकेको छ।'' ( Selectea works Vol. I V, 4, P. 414 )

माथिका भनाईहरुवाट स्पष्ट हुन्छ कि आज पूँजीवादी प्रजातन्त्रको प्रकृति ठीक त्यही रहन गएको छैन जो पहिले थियो। व्यवहारिक राजनीतिमा यो अन्तरलाई वुझन नसक्दा नै उहाँले नयाँ जनवादी कार्यक्रमको सार तत्त्वलाई नैं बुझ्न सकी रहनु भएको छैन। उहाँले नयां जनवादलाई सार रूपमा पुरानो प्रकारको पूँजीवादी प्रजातन्त्रको अर्थमा नै ग्रहण गर्नु हुन्छ। सायद कुरा त्यस भन्दा वढी छ। उहाँले जानी बुझी कन नै संसदीय प्रजातन्त्र, जस्ले अव राजनैतिक प्रतिक्र्यावादको रुप ली सकेको छ, को पक्ष लिन र त्यसलाई पुष्ट गर्न खोजेको पाइन्छ।

आफ्ना दस्तावेजहरुमा उहाँले कतिपय अप्रासंगिक र अनावश्यक विषयहरुको चर्चा गरेको पाइन्छ। ''अठार वर्षको सिंहावलोकन''मा लेखिएको छ, ''सामन्ती व्यवस्था र राजतन्त्रको पनि समाजको एक निश्चित विकास क्रममा प्रगतिशील भूमिका रहेर आएको थियो।'' ( पृष्ठ ५४ ) यो कुराको चर्चा न भएको भए पनि तत्कालको राजनीतिमा कुनै अन्तर आउँदैनथ्यो। उहाँले अर्कातिर आजका ज्वलन्त राजनीतिक प्रश्नहरु, पूँजीवादी वा संसदीय प्रजातन्त्रको कुनै आलोचना गरेको पाइदैन। त्यति मात्र होइन, उहाँले संसदीय प्रजातन्त्र अन्तरगतको सीमित राजनैतिक अधिकारको चर्चा गरेर त्यसलाई प्रगतिशील ठहराउने प्रयत्न गरेको पाइन्छ। ''निरंकुश राजतन्त्र वा तानाशाही व्यवस्थाको तुलनामा,'' जस्तो कि ने. क. पा. ले ''देशका राजनैतिक शक्तिहरूको विश्लेषण''मा लेख्दछ, ''संसदीय प्रणाली अन्तरगत सीमित रुपमा भए पनि वढी राजनैतिक स्वतन्त्रता प्राप्तः हुने कुरालाई अस्वीकार गर्न सकिन्न।'' ( राजनैतिक दस्तावेजहरु पृष्ठ ५० ) तर पूँजीवादी प्रजातन्त्रको प्रतिक्रियावादी चरित्रको भण्डाफोर नगरीकन 'सिमित राजनैतिक अधिकार' को मात्र चर्चा गर्नुको अर्थ त्यसलाई विशेष महत्त्वपूर्ण स्थानमा राख्नु नै हुन्छ। तुलनात्मक किसिमले संसदीय प्रणाली अन्तरगत ''वढी राजनैतिक स्वतन्त्रता'' प्राप्त भए पनि त्यो गौण र नगन्य महत्त्वको कुरा हो। स्तालीनको तलको भनाईवाट उक्त कुरा प्रष्ट हुन्छ।

"पहिले पूँजीपति वर्गले पूँजीवादी प्रजातांत्रिक स्वतन्त्रता बढाउन भूमिका खेल्ने उदारता देखाउन सक्दथ्यो र जन समर्थन प्राप्त गर्न सक्दथ्यो, अब त्यस्तो उदारताको धर्सो पनि बाँकी रहेको छैन, तथाकथित व्यक्तिको स्वतन्त्रता अब बाँकी रहेको छैन, व्यक्तिगत हक खालि पूँजीहुने लाई मात्र प्राप्त हुन्छन, जबकि अन्य सबै नागरिकहरू मानवीय कच्चा पदार्थ मात्र हुन गएका छन्, जस्को खालि शोषण मात्र गरिन्छ। मानिस र राष्ट्रहरूको लागि समान अधिकारको सिद्धान्त माटामा मिलीसकेको छ; त्यसको स्थान 'अल्पसंख्यक शोषकवर्गलाई पूरा स्वतंत्रता, बहुसंख्यक शोषित जनतालाई कुनै स्वतन्त्रतानाई'को सिद्धान्तले लीसकेको छ। पूंजीवादी प्रजातांत्रिक स्वतन्त्रताको झण्डा गिरीसकेको छ।" [ १९ सौं पार्टी कांग्रेसमा स्तालीनको भाषण, १९५२ ]

लेनिनले आफ्नो समयमा यो आशा गर्न सक्नु हुन्थ्यो कि पूँजीवादी प्रजातन्त्र अन्तरगत मिल्ने व्यक्तिगत स्वतन्त्रतालाई पुन: पूँजीवादका विरुद्धको संघर्षमा उपयोग गर्न सकिने छ। तर अब त्यो अतीतको कुरा भइसकेको छ। मानीलेऊँ, ने० का० नेपालमा संसदीय प्रजातन्त्र कायम गर्न सफल हुन्छ। त्यो अवस्थामा उनीहरूले पुन: प्रतिक्रियावादी सत्ता खतम पार्न कम्युनिष्टहरुलाई स्वतन्त्रता प्रदान गर्ने छन् भनेर सोच्नु दिवास्वप्न मात्र हो। आज पूँजीपति वर्गको प्रकृतिमा आएको यस प्रकारको अनुदारता प्रति ध्यान नदिइकन यदि कसैले पूँजीवादी प्रजातन्त्र अन्तरगत मिल्ने सीमित राजनैतिक अधिकारलाई आफ्नो उद्देश्य बनाउँछ भने, जस्तो कि पी. एल. ले गरीराख्नु भएकोछ, त्यो मार्क्सवाद-लेनिनवादलाई १९ सौं शताब्दीको चश्माले नै हेर्नु हुनेछ।

उहाँले लेख्नुभएको छ, "संसदीय प्रजातन्त्रको पुन: स्थापना भए पछि समाजवादी समाजको पृष्ठभूमि तयार गर्नु पर्छ भन्ने कुरामा पनि सहमत छौं।" ( ने. का. को समाजवादको विवेचना र आजको परिस्थितिमा हाम्रो कर्त्तव्य, लेखक पुष्पलाल, पृष्ट २ ) यसरी उहाँले स्पष्टत: समाजवाद तिर बढनको लागि संसदीय बाटो स्वीकार गर्नु हुन्छ।

वास्तवमा उहाँको विश्वास अनुसार नयाँ जनवाद भनेको संसदीय प्रजातन्त्रको सीमा भित्र त्यही बाटो गएर प्राप्त हुने प्रजातन्त्र नै हो। उहाँले समाजवाद वा नयाँजनवाद जे को कुरा गरे पनि सार रुपमा त्यसको अर्थ संसदीय प्रजातन्त्रको पुन: स्थापना मात्र हो।

— ४ —

पूँजीवादी वा संसदीय प्रजातन्त्र प्रतिको आफ्नो दोष पूर्व सोंचाई का कारणले उहाँ नेपालको प्रजातांत्रिक आन्दोलन प्रति सही समझदारी बनाउन असमर्थ हुनु भएको छ। उहाँले नेपालको प्रजातांत्रिक आन्दोलन बारे जे जति सोच्नु हुन्छ त्यही संसदीय प्रजातन्त्रको सीमा भित्र। सात सालको क्रान्तिको नेतृत्व गरी रहेका

तत्वहरूको "पृष्ठ पोषक" भारतीय एकाधिकार पूँजीवाद भन्ने कुरामा उहाँ सहमत हुनु हुन्छ ( अठार वर्षको सिंहावलोकन, पृष्ठ १७ )। दिल्ली संझौता गद्दारी थियो भन्ने कुरामा नेपालका सबै वामपन्थीहरू एकमत छन्। त्यसका बावजूद उहाँले यो मान्नु हुन्छ कि "आन्दोलन संझौतामा टुंगिएता पनि नेपालको संविधान-को निर्माण गर्ने अधिकार राजाको हातवाट समाप्त भै जन प्रतिनिधिका हातमा आयो। सात सालका क्रान्तिको यो मुख्य उपलब्धी थियो"। ( उही, पृष्ठ १८ )

शुरूमा आफ्नो राजनीतिक अपरिपक्वताका कारणले ने. क. पा. ले अन्तरीम विधानलाई उपलब्धी मानेको थियो तर आज यति लामो अनुभव पछि पनि जवसंम राजसत्ता प्रतिक्रियावादी शक्तिका हातमा केन्द्रित रहन्छ, जनतालाई कुनै 'उपलब्धी' हुदैन भन्ने कुरा स्पष्ट न हुनु आश्चर्यको कुरा हो। यस्तो उपलब्धी को कुरा उहाँले त्यसबेला गर्नु हुन्छ, जवकि स्वयं उहाँले यो वास्तविकतालाई स्वीकार गर्नु हुन्छ, सातसाल पछि "उदारवादी सामन्त वर्गको नेता राजाका हातमा देशको राजसत्ता मूलत: आउँछ।" ( नयाँ जनवादी कार्यक्रम, पृष्ठ २९ ) उहाँले एकै साथ दुइटा कुरा गर्नु हुन्छ; देशको राज सत्ता "राजा को हातमा" आउँछ; संविधान निर्माण गर्ने अधिकार "राजाका हातबाट समाप्त भई जन प्रतिनिधिको हातमा" आउँछ। यी दुवै कुरा एकै साथ कसरी संभव भए ?

लेनिनले भन्नु भएको छ, "जब संम शक्ति जारशाहीका हातमा रहन्छ, जुन सुकै प्रकारका प्रतिनिधि भए पनि ती खोक्रा र दुर्भाग्य पूर्ण प्रलाप हुने छन्"। [ Collected Works Vol. 9,P.33 ] त्यसकारण उहाले विजयको अनिवार्य शर्तको रूपमा अन्तरिम क्रान्तिकारी सरकार को स्थापनामा जोड दिनु भएको छ, जस्को काम राष्ट्रिय संविवान सभाको चुनाव गराउने र न्यूनतम कार्यक्रम लागु गर्ने हुन्थ्यो। त्यसको अभावमा संविधान सभाको अधिकारले पनि कुनै महत्त्व राख्दैन भन्ने कुरा हाम्रो देशको आफ्नै अनुभववाट प्रष्ट भई सकेको छ।

नेपाल कम्युनिष्ट पार्टीले विगत अनुभववाट शिक्षा लिएको छ। त्यसको "तात्कालिक राजनीतिक प्रस्ताव"मा भनिएको छ : आज देश र जनताका अगाड़ि उपस्थित समस्याहरूको समाधान "वर्तमान व्यवस्था वा संसदीय प्रणाली अन्तर-गत कायम हुने कुनै सरकार द्वारा सम्पन्न हुन सक्तैन। यी दुवै प्रणालीले सामन्त, नोकरशाह, दलाल तथा विदेशी पूँजीपतिको नै पक्ष लिन्छन्। त्यसकारण माथिका कामहरू पूरा गर्न देशभक्त र प्रजातांत्रिक शक्तिहरुको सरकार निर्णयात्मक पूर्व शर्त हो। देशभक्त र प्रजातांत्रिक शक्तिहरु भन्नाले माथिका तात्कालिक मागहरू-सित सहमत हुने तत्वहरूलाई लिनु पर्छ! अर्थात जसले पंचायती प्रजातन्त्रको अप्रजातान्त्रिक र अराष्ट्रिय पक्षको विरोध गर्छन, देशको सार्वभौमिकता र स्व-

तन्त्रताकालागि विदेशी प्रतिक्रियावादी शक्तिहरूसित संघर्ष गर्न चाहन्छन् तथा जनताका अन्य तात्कालिक भागहरुको समर्थन गर्छन, तिनीहरुलाई नै देशभक्त र प्रजातांत्रिक शक्ति संझनु पर्छ। उनीहरू द्वारा निर्मित यस्तो सरकारले सर्वप्रथम माथिका कामहरू पूरा गर्नेछ, त्यस पछि संविधानको निर्माणको लागि चुनावको व्यवस्था गर्नेछ। त्यो नयां संविधान अनुसार गठित सरकारलाई जिम्मेवारी सुंपनु संम उसको काम हुनेछ।" ( राजनैतिक दस्तावेजहरु, पृष्ठ १९–२० )

अठारवर्षको क्रान्तिकारी संघर्षको सिंहावलोकन गर्दै उहाँले लेख्नुभएकोछ "यस्तो स्थितिमा सात सालको क्रान्तिको मुख्य उपलब्धीको रक्षाको निम्ति यस्तो कार्य नीति लिनु पर्दथ्यो जस्ले संविधान सभाको प्रश्न नेपालमा टाल्न न सकोस र त्यसको निम्ति जनताको पहलकदमी उठाउन सकियोस। त्यस बखत पार्टीले जुन कार्य नीति लिएको थियो त्यो सही थियो।" ( सिंहावलोकन, पृष्ठ १७ )

होइन, प्रतिक्रियावादी राजसत्ता अन्तरगत संविधान सभाको चुनावमा नै मुख्य जोड़ लगाउने कार्यनीति गलत थियो। क्रान्तिकारी अन्तरिम सरकारको स्थापनाकालागि जोड़ लगाउनु र त्यसका लागि तल देखि क्रान्तिकारी संघर्ष उठाउनु सही कार्यनीति हुन्थ्यो। त्यसवेला देशमा क्रान्तिको जुन उभार थियो, त्यस माथि ध्यान दिंदा त्यस प्रकारको कार्य नीतिको पक्षमा आधार पनि थियो। यस्तो क्रान्तिकारी कार्यनीतिको अभावमा हाम्रो गतिविधि संशोधनवादी नै हुन गयो। खालि माझीहरु मात्र होइन, द्वितीय महा अधिबेशन पछि विधानसभाको पक्षमा र अल्प मतमा रहेका साथीहरु पनि त्यस प्रकारको संशोधनवादी प्रभाववाट मुक्त हुन सकेका थिएनन्।



सत्र साल पछि ने० का० द्वारा संचालित आन्दोलनलाई पनि उहाँले प्रजातान्त्रिक आन्दोलन संझनु भएको छ। तर त्यो आन्दोलनको प्रकृति कस्तो थियो ? यस बारे उहाँले लेख्नु भएको छ, "त्यो अन्तर्राष्ट्रिय पूँजीवादको मदतले देशमा नियन्त्रित रूपले" चलेको "सशस्त्र संघर्ष" थियो। ( कार्यक्रम, पृष्ठ० ३१ ) अगाड़ि लेखिएको छ; पछि अन्तर्राष्ट्रिय पूँजीवादको "इशारामा" ने० का० ले "राष्ट्रमा बढ़दो कम्युनिष्ट खतराको बहाना मा.........प्रजातन्त्रको निम्ति गरिएको आन्दोलनलाई नै.........फिर्ता लिई राजाको पंचायती व्यवस्थालाई समर्थन गऱ्यो"। ( उही, पृष्ठ० ३१ ) अन्तर्राष्ट्रिय पूजीवादको मददले चल्ने आन्दोलनलाई "प्रजातन्त्रको निम्ति गरिएको आन्दोलन" भन्नु ले नै बताउँछ कि पी० एल० को सोंचाई कति गलत र दोषपूर्ण छ ? त्यो सोचाईको अर्थ यो भयो कि अन्तर्राष्ट्रिय पूँजीवादले पनि कुनै देशमा प्रजातांत्रिक आन्दोलनलाई मदद गर्छ। प्रजातन्त्र राष्ट्रीयताबाट भिन्न हुदैन। भारतीय एकाधिकारले नेपालको प्रजातांत्रिक आन्दोलनलाई मदद गर्दछ भनेर मान्नुको अर्थ स्वतः यो हुन्छ कि उसले नेपालको

राष्ट्रिय आन्दोलनलाई मदद गर्छ, जसको अर्थ हुन्छ; उस्ले स्वयं आफ्नै स्वार्थको विरोध गर्छ। यो तर्क कति हास्यास्पद छ ? स्वयं स्पष्ट छ। अर्को तिर उहाँले अन्तर्राष्ट्रिय पूँजीवादको मददले चलेको आन्दोलनलाई प्रजातन्त्रको निम्ति चलेको आन्दोलन बाताएर उहाँले पुनः यो प्रष्ट गर्नु भएको छ कि उहाँले प्रजातांत्रिक आन्दोलनलाई बितेको युगको अर्थमा नै बुझ्नुहुन्छ र त्यसको आधुनिक नयाँ तत्व-साम्राज्यवाद विरोधी नयाँ पक्ष– लाई ध्यानमा राख्नु हुन्न।

भारतीय एकाधिकारको मददमा चल्ने "सशस्त्र संघर्ष" लाई प्रजातन्त्रको आन्दोलन संझनुको मूलमा उहाँको यो दोषपूर्ण सोचाईले काम गरेको छ कि उहाँले भारतीय एकाधिकारको नेतृत्वमा गठित सरकारलाई नै प्रजातांत्रिक संझनु हुन्छ। उहाँले लेख्नु भएको छ, "भारतीय एकाधिकार पूजीवादी वर्गको नेतृत्वमा प्रजातांत्रिक सरकार गठन भयो"। [ मूलवाटो, पृ० २५ ] एकाधिकार पूजीपति वर्गको "नेतृत्वमा" चल्ने सरकारलाई प्रजातांत्रिक वताएर उहाँले डाँगेहरूलाई पनि उछिन्नु भएको छ। उनीहरूले पनि त्यही कुरा भनेका छन्, तर त्यति नांगिएर होइन। उनीहरूले त्यसलाई प्रजातांत्रिक सरकार बताउछन्, तर यो ब्याख्याका आधारमा कि त्यो "पूरै राष्ट्रिय पूजीपति वर्गको वर्ग शासन" हो। ( Proceedings of The seventh Congress of the C. P. J. Bombay, 1964, P. 25 )

जहाँ संम सिद्धान्तको प्रश्न छ, उनीहरू यस वारे स्पष्ट छन् कि सामन्त र एकाधिकार पूँजीपति वर्गलाई प्रतिनिधित्व गर्ने कुनै तत्त्व प्रजातान्त्रिक हुन सक्तैन। आजको युगमा जव कि प्रजातान्त्रिक क्रान्तिको अर्थ नै सामन्त र एकाधिकार पूँजीवाद वा साम्राज्यवाद विरोधी क्रान्ति हुन्छ, तिनै तत्व हरूलाई प्रतिनिधित्व गर्ने तत्वहरूलाई प्रजातान्त्रिक वताउनु कति हास्यास्पद कुरा होला ? डाँगेहरूले पनि भनेका छन्, "एकाधिकार ग्रुप र सामन्ती शक्तिले देशमा प्रतिक्रयावादको, मुख्य प्रजातंत्र विरोधी शक्तिहरूको प्रतिनिधित्व गर्छन" ( उही, पृष्ठ २७ )। भारतमा एकाधिकार पूजीपति र सामन्तहरूको नै सरकार छ। त्यस कारण त्यसलाई प्रजातान्त्रिक भन्न मिल्दैन। डाँगेहरूको चालवाजी यहाँ छ कि उनीहरूले त्यो सरकारलाई राष्ट्रिय पूँजीपति वर्ग को सरकार बताउछन् र त्यो वहानामा आफ्नो एकाधिकार पूँजीवाद प्रतिको संझौता परस्त नीति र दलालीमा पर्दा हाल्ने प्रयत्न गर्छन्।

डाँगे र पी. एल. का विचमा यही अन्तर देखिन्छ : एकाधिकार पूँजीवादको "वर्ग शासन" लाई प्रजातान्त्रिक भन्न न मिल्ने हुनाले पहिलाले त्यसको वर्ग चरित्र को नै उल्टो व्याख्या गर्छन; र पछिल्ला ले ( पी. एल. ले ) एकाधिकार पूँजीपति वर्गको नेतृत्वमा सरकारको गठन भई सकेको छ भनेर मानी सके पछि

पनि त्यसलाई प्रजातान्त्रिक बताउनु हुन्छ। अर्को शब्दमा यो अन्तर यसरी देखा पर्द छ : डाँगेहरूले एकाधिकारको नेतृत्वमा गठित सरकार प्रजातान्त्रिक हुदैन भन्छन्, पी. एल. ले हुन्छ भन्नु हुन्छ। तर जुन बाटो गए पनि आखिरमा दुवै थरको एकै ठाउँमा भेट हुन्छ : दुवै थरले प्रतिक्रियावादी सरकारलाई प्रजातान्त्रिक मान्दछन्। पी. एल. को त्यो विचित्र चालको उद्देश्य नेपालमा सामन्त र दलाल पूँजीपति वर्गको पार्टी नेपाली कांग्रेसलाई "जनतांत्रिक" * बताउन मार्ग प्रस्तुत गर्नु हो।

ने. का. बारे उहाँले लेख्नु भएको छ, "हाम्रो देशको पूंजीपति वर्ग ( ने. का. लेखक) ले २००७ सालमा पूजीवादी जनवादी क्रान्तिको नेतृत्व गरेर आए पनि त्यसले देशको सामन्ती व्यवस्था र देशमा विदेशी प्रभुत्वको विरुद्धमा आमरुपले ( त्यसको अर्थ सामान्य रुपले गरेको थियो भन्ने हो –लेखक ) कहिले नारा उठाएन"। ( सिंहावलोकन, पृष्ठ १३ ) यही एउटा मात्र भनाई पनि यो बताउन पर्याप्त छ : उहाँको सोचाई मार्क्सवाद लेनिनवाद र माओ-त्से-तुंग विचार धाराबाट कति टाढा छ ? त्यसमा उहाँले दुईबटा कुराको प्रतिपादन गर्नु भएको छ। प्रथम, पूंजीपति वर्गले पूंजीवादी-जनवादी क्रान्तिको नेतृत्व गर्न सक्छ। यो आजको युगमा पूंजीपति वर्गले पूंजीवादी–जनतांत्रिक क्रान्तिको नेतृत्व नै गर्न सक्दैन भन्ने माओको बिचारको विरुद्ध छ। द्वितीय, सामन्ती व्यवस्था र देशमा विदेशी प्रमुत्वको विरोध नगर्ने आन्दोलन पनि पूंजीवादी जनत्रांतिक हुन सक्छ। उक्त दुवै कुराका विरुद्ध "आम रुपले कहिले पनि नारा" न उठाउने तत्वले पूंजीवादी-जनतांत्रिक क्रान्तिको नेतृत्व गरेको थियो भनेर लेख्नुको अर्थ अरु के हुन सक्छ ? त्यही गलत समझदारीको नै परिणाम हो कि आज पनि उहाँले सामन्ती तथा औपनिवेशिक स्वार्थका पक्षमा गरिने ने. का. का गतिविधिहरुलाई प्रजातान्त्रिक मानी रहनु भएको छ।

यतिमात्र हैन, उहाँले पूंजीवादी प्रजातांत्रिक क्रान्तिको नेतृत्व सामन्त वर्गले संम गर्छ भन्ने बिचार प्रकट गरेको पनि पाइन्छ। उहाँले ०७ सालको "पूंजीवादी प्रज्ञातान्त्रिक क्रान्ति" को नेतृत्व ने. का. ले मात्र होइन, राजाले पनि गरेको थियो भन्नु हुन्छ। एक ठाउँमा उहाँले ०७ सालको "क्रान्तिको नेतृत्व नेपाली कांग्रेसको तथा राजाका हातमा भएको" ( कार्यक्रम, पृ० २६ ) कुरा र अर्को ठाउँमा "सात सालको क्रान्तिको साझेदार नेतृत्व राजा र नेपाली कांग्रेस" भएको ( उही, पृ० १२ ) कुरा गर्नु भएको छ।

उहाँले ने० का० का सबै नीति र कार्यहरूलाई प्रजातान्त्रिक घोषित गर्ने

---

( * नयाँ जनवादी कार्यक्रम, पृष्ठ ३३ )

प्रयत्न गर्नु हुन्छ। वहाँले मार्क्सवाद लेनिनवादबाट ती सबै कुरा खनेर निकाल्नु हुन्छ जस्ले उहाँको पिछलग्गुपन लाई सही सावित गर्छन। मूलबाटो— उहाँले लेनिनको यो भनाईलाई उद्धृत गर्नु भएको छ, कम्युनिष्ट पार्टी 'निरंकुश शासनको विरोध गर्ने ती सबै तप्का र अंगहरूको समर्थन गर्ने घोषणा गर्छ" (पृ० ५४)। त्यसरी उहाँले यो देखाउने प्रयत्न गर्नु भएको छ कि वर्तमान व्यवस्थाको विरोध गर्ने सबै नीति र गतिविधिहरूको समर्थन उचित हुन्छ (चाहे तिनीहरूको चरित्र जुन सुकै प्रकारको किन न होस !)। तर यहाँ यो उल्लेखनीय छ कि लेनिनले उक्त कुरा १८९५ मा लेख्नु भएको थियो, जुन वेला निरंकुश शासन वा सामन्त विरोधी क्रान्ति हुनु नै पूँजीवादी प्रजातान्त्रिक क्रान्ति हुनु हुन्थ्यो। त्यो वेला स्वयं रूसमा कम्युनिष्ट आन्दोलन एकदम प्रारम्भिक अवस्थामा थियो। लेनिनले पछि यो कुरा स्पष्ट शब्दमा बताउनु भएको छ कि बूर्जुवा आन्दोलनहरूलाई समर्थन गर्ने वा न गर्ने कुरा त्यस्ता आन्दोलनहरूको चरित्र माथि निर्भर गर्छ।

उहाँले लेख्नुभएको छ, "कम्युनिष्टहरूका हैसियतले हामीहरूले उपनिवेश-हरूका बूर्जुवा राष्ट्रिय आन्दोलनहरूलाई समर्थन गर्ने छौं र हामीले गर्नु पनि पर्छ। तर यो हामीले तब नै गर्ने छौं या हामीले तव नै गर्नु पर्छ जब हामीले यो देख्दछौं कि यी आन्दोलन सच्चा अर्थमा क्रान्तिकारी छन् र आम जनताका इन्क्लाबी भावनालाई संगठित गर्न र शिक्षित गर्नलाई बाधा हाल्ने छैनन्" [औपनिवेशिक क्रान्तिका मूल सिद्धान्त, स्टालीन, पृ० ३ वाट उद्धृत]।

— ५ —

पी. एल. को सोचाई अनुसार राष्ट्रियता गौण पक्ष र प्रजातन्त्र प्रधान पक्ष हो। नेपालमा राष्ट्रिय आन्दोलनको अर्थ सामान्यतः सबै प्रकारका साम्राज्यवाद र उपनिवेशवाद विरोधी आन्दोलन र विशेषतः भारतीय एकाधिकार विरोधी आन्दोलन नै हुन्छ। राष्ट्रियताको प्रश्नलाई गौण संझनुको अर्थ हो — भारतीय एकाधिकारको संबन्धलाई गौण संझनु। उहाँका दस्तावेजहरूमा सामन्तवाद, राजा र व्यवस्थामाथि हमला गरिएको छ तर भारतीय एकाधिकार विरुद्धको हमला एकदम उपेक्षित हुन गएको छ। उहाँले राजा र व्यवस्थाको विरोधको आड़मा अर्को पक्षको विरोधलाई कुशलता पूर्वक लुकाईदिनु भएको छ। यही आज ने. का. को नीति हो र त्यही माझीहरुको पनि। ती दुवैको भारतीय एकाधिकार परस्त चरित्र स्पष्ट छ। पी. एल. ले पनि तिनीहरुको खासगरेर ने. का. सितको संबन्धले त्यही बाटो समात्नु भएको छ।

जस्तो कि माथि नै स्पष्ट भई सकेको छ, आज कुनै पनि देशको नयाँ प्रकारको पूंजीवादी प्रजातांत्रिक क्रान्ति सामन्तवाद विरोधी मात्र नभएर साथ-साथै साम्राज्यवाद विरोधी पनि हुनु पर्छ। यदि पछिल्ला कुराको उपेक्षा गरियो भने

त्यो पुरानो प्रकारको पूंजीवादी प्रजातांत्रिक क्रान्ति बन्न जान्छ, जो आजको परिस्थितिमा पूंजीवादी प्रजातान्त्रिक क्रान्ति नै रहन जान्न। आज कुनै पनि देशको सामन्तो व्यवस्था अन्ततः विश्व साम्राज्यवादी व्यवस्थामाथि नै टिकेको हुन्छ। त्यसकारण साम्राज्यवाद सितको संघर्षलाई गौण स्तरमा राख्नुको सीधा र एकमात्र अर्थ स्वयं सामन्तवादको आधारलाई बलियो पार्नु नै हुन्छ। अर्को शब्दमा पुरानो प्रकारको पूंजीवादी प्रजातांत्रिक क्रान्तिले आजको युगमा प्रतिक्रियावादी हितको नै प्रतिनिधित्व गर्दछ। सिद्धान्ततः उहाँले आफ्ना दस्तावेजहरूमा पुरानो प्रकारको पूंजीवादी प्रजातान्त्रिक क्रान्तिको विरोध गरेको पाइन्छ। तर त्यसको एउटा मूल तत्व साम्राज्यवाद विरोधी पक्षलाई उपेक्षा गरेकोले उहाँले सिद्धान्तमा जे कुरा मान्नु भएको छ, व्यवहारमा त्यसको कुनै अर्थ रहन्न।

माओले लेख्नु भएको छ, ''आर्थिक दृष्टिकोणले पिछडिएको तथा अर्ध औपनिवेशिक चीनमा जमीनदार वर्ग र दलाल पूजीपति वर्ग पूरै नै अन्तर्राष्ट्रीय औजार मात्र हुन्छन्, जो आफ्नो अस्तित्व र विकासकोलागि साम्राज्यवादमाथि निर्भर गर्दछन्।'' [चीनिया समाजमा वर्गहरुको विश्लेषण] नेपाल जस्तो सानो, कमजोर र भू-परिवेष्ठित देशमा यो कुरा झन कैयौं गुना बढी सत्य हो। त्यो अवस्थामा ''औजार'' सितको संघर्षलाई प्रधान स्थानमा राखेर त्यसको आधार शक्ति सितको संघर्षलाई गौण स्तरमा राख्नु पलायनवाद नै हो। यो कुरा ठीक त्यस्तै हो, जस्तो कि थापा वा विष्टसितको विरोधलाई प्राथमिकता दिएर राजा प्रति संझौता परस्त नीति अपनाउनु।

यो स्थितिमा यस्तो कुनै पनि प्रयत्न जसले सामन्ती शक्तिहरुका विरुद्ध नै हमला केन्द्रित गरेर साम्राज्यवाद र औपनिवेशिक शक्तिहरुसितको संघर्षलाई गौण स्तरमा राख्दछ, अवास्तविक देखावटी र अप्रत्यक्ष रूपले स्वयं साम्राज्यवाद परस्त नै बन्न जान्छ। आजको विश्वको परिस्थितिमा खालि सामन्तवादका विरुद्ध मात्र संघर्ष गरेर त्यसको विनाश संभव छैन, किन भने त्यसको शक्तिको स्रोत साम्राज्यवाद हुन्छ।

स्तालिनले ट्राट्स्कीको मतको खण्डन गर्दै १९२७ मा लेख्नु भएको छ, ''चीनमा पूंजीवादी प्रजातान्त्रिक क्रान्ति सामन्ती अवशेषका विरुद्ध मात्र होइन, साम्राज्यवादका विरुद्ध पनि लक्षित छ।''

''किन'' ?

''किन भने चीनमा साम्राज्यवाद नै त्यो शक्ति हो, जस्ले सामन्ती अवशेष र तिनीहरुको पूरै नोकरशाही सैनिक ढाँचालाई समर्थन गर्छ, प्रेरणा दिन्छ, पोषण गर्छ र संरक्षण गर्छ''।

''किन भने साथ-साथै साम्राज्यवादका विरुद्ध संघर्ष न चलाईकन चीनमा

सामन्ती अवशेषलाई खतम गर्न संभव छैन"।

"किन भने जस्ले चीनमा सामन्ती अवशेषलाई खतम गर्न चाहन्छ, त्यसले अनिवार्यतः साम्राज्यवाद र चीनका साम्राज्यवादीहरुका विरुद्ध आफ्नो हात उठाउनु पर्छ।"

"किन भने साम्राज्यवादका विरुद्ध दृढ़ संघर्ष न चलाईकन चीनमा सामन्ती अवशेषलाई खतम गर्न सकिंदैन।"

(J. stalin on Chinese revolution, New book center, Calcutta, 1970 p. 96, 97)

माथि लेखिएको कुरा स्तालिनले त्यो अवस्थामा भन्नु भएको थियो, जब कि कमिन्टर्नको यो विचार थियो कि "वर्तमान कालमा सामन्तवादका अवशेषहरु नै चीनमा उत्पीडनका प्रधान तत्व हुन," (उही, पृष्ठ ९५)। त्यसरी स्तालिनको व्याख्याले यो स्पष्ट गर्छ कि अमेरिकन साम्राज्यवाद, विशेषतः भारतीय एकाधिकार तथा तिनीहरुको स्वार्थको प्रतिनिधित्व गर्ने "साम्राज्यवादी दल" ने. का. का विरुद्ध आफ्नो हात न उठाई कन नेपालमा सामन्ती अवशेषहरुका विरुद्ध पनि सफल संघर्षको संभावना छैन। माओले पनि लेख्नु भएको छ, "जब संम साम्राज्यवादी शासनलाई पर्याकिंदैन तब संम सामन्ती जमीनदार वर्गको शासनलाई खतम गर्न सकिंदैन, किन भने साम्राज्यवाद नै त्यसको मुख्य आधार हुन्छ। त्यही किसिमले जब संम सामन्ती जमीनदार वर्गलाई खतम गर्न किसानहरूलाई मदत गरिदैन साम्राज्यवादी शासन खतम पार्नकोलागि शक्तिशाली क्रान्तिकारी सैन्य दलहरू तयार पार्न असंभव हुने छ, किन भने जमीनदार वर्ग साम्राज्यवादी शासनको मुख्य सामाजिक आधार हो र किसान वर्ग चीनियाँ क्रान्तिको मुख्य शक्ति हो। त्यस कारण यी दुई आधार भूत कार्यहरू राष्ट्रिय क्रान्ति र प्रजातान्त्रिक क्रान्ति एकै साथ भिन्न र संयुक्त हुन्छन्।" (Selected works, vol 2 Page 318.)

त्यसकारण राष्ट्रिय क्रान्ति र प्रजातान्त्रिक क्रांति मध्ये कुनैलाई उपेक्षा गर्ने नीतिलाई सही मार्क्सवादी लेनिनवादी भन्न सकिन्न। उहाँले साम्राज्यवादका साथै भारतीय एकाधिकारसितको अंतरविरोधलाई गौण राखेको कुरा तलको भनाईवाट प्रष्ट हुन्छ : नेपालमा साम्राज्यवादका साथै भारतीय एकाधिकार तथा पंचायती व्यवस्था दुवैसित भएका मूल अंतरविरोध मध्ये "सामन्ती व्यवस्थाको पृष्टपोषक राजतंत्र र जनता बीचको अंतरविरोधले मुख्य अंतरविरोधको रूप लिएको छ।" (कार्यक्रम पृष्ठ ५९) यसले बताउँछ कि अर्को सितको अंतर विरोधलाई वहाँले गौण ठहराउनु हुन्छ।

स्तालिनले भन्नु भएको छः उपनिवेशहरू र पराधीन देशहरूमा "राष्ट्रिय तत्व मुक्तिको लड़ाईको तत्वको रूपमा एक क्रान्तिकारी कारण हुन्छ। यो अन्तर न गर्नु, यो अन्तर न संझनु र साम्राज्यवादी देशहरूको क्रान्ति र उपनिवेशहरूको क्रान्तिलाई एउटै किसिमले हेर्नु मार्क्सवादको बाटो छाडी दिनु हो, यो लेनिनवादको बाटोलाई छाडी दिनु हो र त्यो बाटो अपनाउनु हो जस्ले दोश्रो अन्तर्राष्ट्रियको समर्थन गर्दछन।" ( औपनिवेशकि क्रान्ति के मूल सिद्धान्त, चीनी इन्लकाव पर स्तालिनका भाषण, पृष्ठ १ ) त्यो अन्तरको उपेक्षा गरेर पी. एल. ले वास्तवमा त्यही दोश्रो अन्तर्राष्ट्रियको बाटो समात्नु भएको छ र मार्क्सवाद-लेनिनवादको बाटो छडी दिनु भएको छ। उहाँले यो तथ्यलाई वुझ्नु भएको छैन कि पराधीन र औपनिवेशिक देशहरूको क्रान्तिमा यूरोप वा जारकालीन रूस जस्ता साम्राज्यवादी देशहरूको क्रान्तिमा न पाइने भन्दा एउटा विशेष तत्व, जसलाई स्तालिनले "राष्ट्रिय तत्व" वताउनु भएको छ, थपिएको हुन्छ। पी. एल. ले मार्क्स वा लेनिनका कृतिहरूलाई सर्सरी पढनु भयो, तर यो अन्तरलाई वुझन सक्नु भएन कि मार्क्सले युरोपको परिस्थिति र लेनिनले त्यो वेलाको रूसको परिस्थितिमा प्रकट गरेका विचारहरूलाई औपनिवेशिक देशहरूमा नयाँ उत्पन्न यो तत्वका पृष्ठभूमिमा-नै पढनु पर्छ।

स्वयं स्तालिनका पालामा नै त्यहाँका कैयौं कम्युनिष्ट नेताहरूले यो परिवर्तन-लाई वुझन सकेका थिएनन्। उनीहरूको "आधारभूत गल्ती" को आलोचना गर्दै स्तालिनले भन्नु भएको थियो, "विरोधी दलको आधारभूत गल्ती यो हो कि त्यसले रूस जस्तो साम्राज्यवादी देश, जस्ले अरूअरूको शोषण गर्छ, को १९०५ को क्रान्तिलाई चीन जस्तो शोषित र अर्द्ध औपनिवेशिक देशको क्रान्तिसित मिलाइ दिन्छ, जो दोश्रा देशहरूको साम्राज्यवादी शोषणको प्रतिरोध गर्न बाध्य छ"। ( उही, पृष्ठ २ )

त्यो गलत समझदारीले गर्दा उहाँ नेपालको क्रान्तिको चरित्र वुझ्न कहाँ संम असमर्थ हुनु भएको छ, त्यो कुरा पी. एल. गुटवाट प्रकाशित तलको भनाईवाट प्रष्ट हुन्छ—

"आज आर्थिक दृष्टिले नेपालको स्थिति अर्द्ध उपनिवेशवादी भएकोले भारतीय एकाधिकार पूँजीवाद र अमेरिकी साम्राज्यवाद पनि हाम्रो क्रान्तिका प्रमुख दुश्मन हुन्। **तर देश माथि उनीहरूको प्रत्यक्ष राजनीतिक अधिकार न भएको र पंचायती सामन्तवादलाई नै वलियो पार्न उनीहरूलाई नेपालको आर्थिक, राजनीतिक तथा सांस्कृतिक क्षेत्रमा भित्र्याइएकोले आजको क्रान्तिको**

स्वरूप 'राष्ट्रिय मुक्ति आन्दोलन न भै * पंचायती सामन्तवाद र यसलाई टिकाई शोषणमा हिस्सेदार बनी रहेको विदेशी पूँजीवाद एवं साम्राज्यवादलाई नेपालको माटोवाट उन्मूलन गर्ने 'नया जनवादी क्रान्ति' हो।'' ( नयाँ जनवादी संस्कृति, 'नयाँजनवाद', माघ-फाल्गुण २०२८, पृष्ठ ६२ )

सर्सरी हेर्दा माथि लेखिएको कुरा स्वयंमा अलमलिएको छ र त्यसको कुनै अर्थ निकाल्नु निकै नै अप्ठ्यारो कुरा हो। तै पनि माथि जे भनिएको छ, त्यसलाई विश्लेषण गरेर हेर्ने हो भने यो वुझ्न गाह्रो पर्दैन कि वास्तवमा उहाँले के भन्न खोज्नुभएको छ ?

१ – नेपालको स्थिति आर्थिक दृष्टिकोणले अर्द्ध उपनिवेशवादी छ।

२ – नेपालमा बिदेशीहरूको प्रत्यक्ष अधिकार न भएकाले आजको क्रान्तिको स्वरूप राष्ट्रिय मुक्ति आन्दोलनको छैन, ३ — भारतीय एकाधिकार पूँजीवाद र अमेरिकी साम्राज्यवादलाई पंचायती सामन्तवादलाई वलियो पार्न भित्र्याइएको छ।

माथिका भनाईहरूले वास्तविकताको खुला किसिमले तोड-मोड गरेका छन्। नेपाल, खालि आर्थिक दृष्टिकोणले मात्र होइन, राजनीतिक दृष्टिले पनि अर्द्ध उपनिवेशको अवस्थामा छ। पी. एल. को भनाईको अर्थ यो निक्लन्छ कि राजनीतिक दृष्टिकोणले नेपाल पूर्ण स्वतन्त्र छ। माथिको भनाईको अर्थ यो पनि निक्लन्छ कि नेपालको राजनीतिमा विदेशी स्वार्थ र भूमिकाको स्थान निष्क्रय र गौण छ। त्यो पंचायती व्यवस्थाको पूरक र सहायक तत्व मात्र हो–भित्र्याइएकोले नेपालमा प्रवेश गरेको ( त्यसभन्दा पहिले के उनीहरूले नेपालमा स्वयं प्रवेश गरेका थिएनन् ? ) यो साम्राज्यवाद र नव उपनिवेशवादका विरूद्धको संघर्षलाई पछाडि पार्ने षडयन्त्र हो। माथिको भनाईद्वारा पी. एल. गुटले जे भन्न खोजेको छ, त्यसको मूल तात्पर्य यो हो नेपालको आजको स्थिति राष्ट्रिय मुक्ति आन्दोलनको छैन, त्यसकारण विदेशी पूँजीवादसितको संघर्ष गौण महत्त्वको कुरा हो।

उक्त धारणालाई पुष्ट गर्न उनीहरूले चीनको उदाहरणलाई निकै अगाड़ि सारेको पाइन्छ। उनीहरूको भनाई अनुसार जापानी आक्रमणको समयमा नै चीनको क्रान्तिले राष्ट्रिय मुक्ति आन्दोलनको रूप लिएको थियो, जब कि त्यसभन्दा पहिले साम्राज्यवाद सितको संघर्ष गौण महत्त्वको कुरा थियो। त्यो भनाईको आधारमा उनीहरूले नेपालको आजको अवस्था चीनमा जापानको हमलाको वेलाको जस्तो न भएकाले नेपालको क्रान्तिको चरित्र राष्ट्रिय क्रान्तिको छैन र, त्यसकारण साम्राज्यवाद विशेषतः भारतीय एकाधिकार सितको विरोध गौण हुन जान्छ भन्ने निष्कर्ष निकाल्छन्। अर्का शब्दमा उनीहरूले राष्ट्रियतालाई गौण पक्षका रूपमा पेश गर्छन्। तर खालि जापानी हमलाका वेलामा मात्र होइन, गृहयुद्धका वेलामा

* जोड लेखकको।

पनि चीनमा साम्राज्यवाद विरोधी पक्षको उपेक्षा गर्नु गंभीर गल्ती हुन्थ्यो। यस्ता गल्ती त्यहाँ पनि देखिएका थिए र त्यसका विरुद्ध माओ-त्से-तुङ्गले शुरू देखिनै कड़ा संघर्ष गर्दै आउनु परेको थियो।

"कम्युनिष्ट" मा लेखिएको छ, गृह युद्ध (१९२७-३७) को दश वर्षे कालमा, जुनवेला चीनियाँ सर्वहाराले कृषि क्रान्तिकारी आन्दोलनको नेतृत्व गरिरहेको थियो, कामरेड माओ-त्से-तुङ्गले वांमपन्थी संकीर्णवादी अवसरवादको दृढतापूर्वक विरोध गर्नुभयो। त्यो अवसरवादी प्रवृत्तिले साम्राज्यवाद-विरोधको अत्यधिक महत्वपूर्ण राजनीतिक तत्वलाई बिर्सन्थ्यो तथा च्याङ काई शेकको गद्दारी पछि पनि चीनको क्रान्तिको प्रकृति मूलत: राष्ट्रिय क्रान्तिको नै थियो र साम्राज्यवादी प्रभुत्वको उन्मूलन तिर लक्षित थियो भन्ने तथ्यलाई उपेक्षा गर्‍यो। ( The statement of Editorial Board of Communist on Anti-Leninist Criticism of Comrade Mao-tse tung, Communist, July-August, 1952, Page 32 ) स्तालिनले पनि सन् १९२६ मा नै, जब जापानी हमलाको कुरा अझै परै थियो, स्पष्ट शब्दमा भन्नु भएको थियो, "यस कारणले कि चीनको क्रान्ति राष्ट्रिय मुक्ति क्रान्ति हो, त्यो साम्राज्यवाद र चीनमा त्यसका दलालहरू प्रति लक्षित हुने छ।" ( J. Stalin on Chinese revolution, Page 17 )

माओले, जस्तो कि माथि नै उल्लेख गरियो, अर्द्ध उपनिवेशवादी चीनमा जमीनदार र दलाल पूंजीपति वर्गलाई साम्राज्यवादका "औजार" का रूपमा उल्लेख गर्नु भएको छ, तर पी. एल. ले पछिल्लालाई नै पंचायती व्यवस्थाका औजारका रुपमा उल्लेख गर्नु भएको छ। "भित्र्याइएको" भन्नुको अर्थ त्यही नै निक्लन्छ। उहाँको व्याख्या अनुसार यस्तो देखिन्छ कि साम्राज्यवाद होइन, पंचायती व्यवस्था नै विश्व प्रतिक्रियावादको रक्षा-किल्ला हो। 'नयाँ जनवादी कार्यक्रममा लेखिएको छ,-- "आजको हाम्रो मुख्य दुश्मन सामन्तवाद, साम्राज्यवाद र भारतीय पूंजीवाद हो। सामन्ती अधिनायकवादी पंचायती व्यवस्था यसको रक्षा-किल्ला हो।" ( पृष्ठ ७३ ) उहाँको भनाईले यस्तो देखाउं छ कि नेपालको प्रतिक्रियावादी व्यवस्था साम्राज्यवादको बलमा टिकेको छैन। तर साम्राज्यवाद नै यसको बलमा टिकेको छ।

उहाँले क्रान्तिको लक्ष वा रणनीतिका रुपमा साम्राज्यवादलाई "खतम" गर्ने कुराको अवश्य उल्लेख गर्नु भएको छ। तर, अर्कातिर व्यवहारमा त्यो कुरालाई उहाँले भविष्यकालागि सुरक्षित राख्नु हुन्छ। उहाँका दस्तावेजहरूमा तत्कालकालागि साम्राज्यवाद तथा विदेशी एकाधिकार पूँजीवादको विरोधमा जोड़ लगाउने कुराको कहीं पनि उल्लेख गरिएको छैन। उहाँको कार्यक्रममा

लेखिएको छ, "मुख्य रूपले आफ्नो संपूर्ण शक्ति पंचायती व्यवस्थाको विरोधमा आन्दोलन उठाउन लगाउने कार्यनीति हुनु पर्छ।" ( पृष्ठ ७३ ) यसरी पंचायती व्यवस्थाको विरोधमा आन्दोलन उठाउने कुराको आड़मा उहाँले विदेशी प्रतिक्रियावादका विरोधको प्रश्नलाई चूपचापसित वर्तमानको परिधिबाट वाहिर निकालिदिनु भएको छ।

यहाँ उल्लेखनीय छ कि माझीहरूले पनि द्वितीय महाधिवेशनको वेलामा र विशेषत: त्यसपछि त्यो अधिवेशनको निर्णयको व्याख्या गर्ने बेलामा गणतन्त्रको सिद्धान्तको सीधै विरोध गरेका थिएनन्। सिद्धान्त वा लक्षको रूपमा त्यसलाई मान्ने वारे उनीहरूको कुनै मतभेद थिएन, कम से कम प्रकट रूपमा। तै पनि राजा विरोधी सामान्य प्रकारको विरोधलाई रोक्न पनि उनीहरूले पूरा जोड़ लगाएका थिए। त्यही तरीका आज पी० एल० ले पनि अपनाइ राख्नु भएको छ–क्रान्तिको लक्ष, रणनीति वा सिद्धान्तको रूपमा साम्राज्यवाद वा भारतीय एकाधिकारको अन्तको नारा दिन तयार, तर तत्कालकालागि पंचायती व्यवस्थाका साथै विदेशी, मुख्यत: भारतीय प्रतिक्रियावादका विरुद्ध आन्दोलन उठाउने नीतिको परित्याग।

## – ७ –

साम्राज्यवाद वा सामन्तवाद प्रतिको विरोधको उपेक्षाको कारणले चीनमा कैयौं पल्ट दक्षिण पन्थी वा अवसरबादी भड्कावहरू उत्पन्न भएका छन्। ती कुराहरू कैयौंपल्ट पूँजिवादी प्रजातान्त्रिक क्रान्तिको धार सामन्ती अवशेषका विरुद्ध मात्र होइन साथ साथै सम्राज्यवादका विरूद्ध पनि लक्षित हुनु पर्छ भन्ने स्तालिनको द्वन्दात्मक विश्लेषणलाई भंग गर्नाले पनि कम हुन गएका छैनन्।

आज नेपालको कम्युनिष्ट आन्दोलनमा पनि उक्त दुवै प्रवृत्ति देखा परिरहेका छन्। पी. एल. गुटले साम्राज्यवाद विरोधी पहलुको उपेक्षा गरिरहेको छ भने राजतन्त्र वा सामन्त विरोधी पहलुको उपेक्षा गर्ने तत्त्वको रूपमा शंभूरामलाई लिन सकिन्छ। पछिल्लाको सारा जोड़ ने. का. वा भारतीय एकाधिकारको विरोधमा छ। तर उक्त दुवै अवसरवादी गल्तिको श्रोत एउटै हो। चीनमा जसले गृह युद्धको समयमा साम्राज्यवाद विरोधी पक्षको उपेक्षा गरेका थिए, जापान विरोधी युद्धका समयमा पुन: सामन्तवाद विरोधी पक्षको उपेक्षा गर्न पुगे। त्यही प्रकारले आज ने. का. वा राजा मध्ये एउटालाई मुख्य दुश्मन ठानेर अर्को पक्ष-प्रति संझौता पूर्ण दृष्टिकोण अपनाउने तत्त्वहरू देख्तामा दुई परस्पर विरोधी विचार अपनाउने तत्त्वहरू--भविष्यमा पुन: एकै ठाउँमा उभिन पुगे भने त्यो आश्चर्यको कुरा हुने छैन। दरभंगा प्लेनममा के वहाँहरू दुवै जनाले साथ साथै ने. का. को पिछलग्गू नीति लिनु भएको थिएन र? दरभंगाबाट काठमाण्डू पुगे

पछि यस. आर. ले दरभंगाको आफ्नो सोंचाईमा "पुनर्विचार" को घोषणा गर्नु भयो। वहाँले माझीको दलाली र प्रशासनको कृपा प्राप्त गर्ने प्रयत्न गर्न थाल्नु भयो, तर उनीहरू वहाँ माथि विश्वास गर्न तयार भएनन् र, फलतः, वहाँ गिरफ्तार हुनु भयो। त्यसले गर्दा वहाँको गद्दारी प्रकट न भई ढाकिन पुग्यो र वहाँले पुनः आफुलाई वामपन्थी कम्युनिष्टको रूपमा देखाउने मौका पाउनु भयो। आज एउटाले ने. का. र अर्काले राजाको दलाली गरेर पनि वहाँहरूको बीचमा कुनै मौलिक अन्तर छैन, किन भने अवसरवाद र गद्दारीका सबै बाटाहरू अन्तमा एकै ठाउँमा मिल्न पुग्छन्।

स्तालिनका चिनो क्रान्ति संम्बन्धी विचारहरूको ट्राट्स्कीहरूले विरोध गरेका थिए। उनीहरूले चीनी क्रान्तिको साम्राज्यवाद वा सामन्तबाद विरोधी दुवै पक्षको उपेक्षा गरेका थिए। त्यसैले अन्ततः उनीहरू प्रतिक्रान्तिको बाटो समात्न पुगेका थिए। पी. एल. ले साम्राज्यवाद विरोधी तथा शंभुरामले सामन्तवाद विरोधी पक्षको उपेक्षा गरेर दुवै थरले संमिलित रूपमा नेपालमा ट्राट्स्कीवादको पूर्ण चित्रलाई प्रस्तुत गर्नु हुन्छ।

साम्राज्यवादको विरोधलाई खालि साम्रान्य अर्थमा लिएर पुग्दैन। विश्वको स्तरमा अमेरिकन साम्राज्यवाद नैं मानव जातिको मुख्य दुश्मन हो। तर, नेपालको खास सन्दर्भमा भारतीय एकाधिकार सितको अन्तरविरोधले नै प्राथमिक महत्त्व राख्दछ। नेपालको अर्थ तन्त्रमा भारतीय एकाधिकारको नै सबै भन्दा बढी प्रभुत्व छ। राजनैतिक दृष्टिकोणले भारतवाट नै नेपाललाई सबै भन्दा बढी खतरा छ। यो वस्तुस्थितिले गर्दा नै भारतीय एकाधिकार सितको अन्तर्विरोधले नेपालकालागि प्राथमिक स्थान राख्दछ। संशोधनवादीहरूले यसको उल्टो गर्छन। उनीहरूले विदेशी प्रतिक्रियावादी शक्तिहरू मध्ये अमेरिकन साम्राज्यवाद सितको विरोधमा अपेक्षाकृत बढ़ी जोड लगाउछन् र भारतीय एकाधिकार सितको अन्तर्विरोधलाई गौण स्तरमा राख्छन्। जुन हदसंम अमेरिकन साम्राज्य वाद र भारतीय एकाधिकार सित अन्तर्विरोध चल्छ, सोभियत संशोधनवादीहरूले स्पष्टतः भारतीय प्रतिक्रियावादको पक्ष लिन्छन्। त्यही अनुरूप, भारतका संशोधन वादी हरूले अमेरिकाको विरोधमा जोड़ लगाएर त्यहाँको प्रतिक्रियावादी सरकारको अन्धराष्ट्रवादी र औपनिवेशिक नीतिहरूको पक्ष लिइरहेका हुन्छन्। नेपालमा माझीहरूले त्यही गरिरहेका छन्। उनीहरूले अमेरिकन साम्राज्यवाद वारे त केही न केही हल्ला मच्चाउँछन्, तर भारतीय विस्तारवादवाट नेपालमा पुगी रहेको खतरावाट जनताको ध्यान हटाइने काम गरिरहेका छन्। यो पनि एक प्रकारको पलायनबाद हो -जुनवेला जुन पक्षवाट बढी खतराको संभावना छ, त्यस प्रति ध्यान हटाएर अपेक्षाकृत गौण पक्षसितको विरोधमा जोड़ लगाउने।

ठीक त्यही नीति पी. एल. ले पनि अपनाएको पाइन्छ। नयाँ जनवादी कार्यक्रममा प्रशंगवस भारतीय एकाधिकारको आलोचना गरिएको छ। तर त्यसको प्रतिक्रियावादी र विस्तारवादी स्वरूपको विस्तृत विरोध र भण्डाफोर गरिएको छैन। अमेरिकन साम्राज्यवाद बारे लेखिएको छ, "आज अमेरिकी फौजी मशीन, शान्ति सेना, सी. आई. ए. एजेण्ट, इजरायली छाताधारी सैनिक, अमेरिकन डलरले पोषित र हतियारले लेस खम्पाहरूको उत्तरी सीमामा तैनात तथा बृटिश रिक्रुटिङ्ग क्याम्प आदिले हाम्रो राष्ट्रिय स्वतन्त्रतामा शंकट ल्याएको छ।" ( नयाँ जनवादी कार्यक्रम, पृष्ट ३४ ) यी सबै कुरा त डाँगे र माझीहरूले पनि भनि रहेका छन्। तर भारतीय विस्तारवादद्वारा नेपालको स्वतन्त्रतामा जुन शंकट देखा परिरहेको छ, त्यसको कुनै उल्लेख गरिएको छैन। स्वयं पी. एल. ले भन्नु भएको छ कि नेपाल साम्राज्यवाद, विशेष गरी भारतीय पूँजीवादद्वारा पीडित छ, जुन अमेरीकन साम्राज्यवाद द्वारा नेपाल सामान्य रूपले पीडित छ, त्यस द्वारा त नेपालको स्वतन्त्रतामा शंकट आएको कुरा गर्नु, तर जुन विदेशी शक्ति द्वारा नेपाल "विशेषगरी" पीड़ित छ, त्यस द्वारा नेपालको स्वतन्त्रतामा शंकट आएको कुराको कुनै चर्चा नगर्नु–यसलाई अवश्य नै वस्तुवादी दृष्टिकोण भन्न सकिन्न। भारतीय प्रतिक्रियावादद्वारा नेपालको स्वतन्त्रतामा शंकट आएको कुराको उहाँले जानी-बुझी कन नै चर्चा गरी रहनु भएको छैन। किन भने त्यो अवस्थामा त्यो ( भारतीय एकाधिकार ) सितको अन्तर्बिरोधलाई गौण स्तरमा राख्ने ठाउँ नै कहाँबाट मिल्दथ्यो ?

'मूलबाटो' को काल संम पी. एल. को राष्ट्रियता संबंधी दृष्टिकोण अपेक्षाकृत सही ठाउँमा थियो। त्यसमा उहाँले "राष्ट्रियता, सार्वभौमिकता र प्रजातन्त्र"लाई कम से कम सिद्धान्ततः बराबरीमा राखेको पाइन्छ। त्यसमा उहाँले जहाँ पनि प्रजातन्त्रको चर्चा गर्नु भएको छ, राष्ट्रियता र सार्वभौमिकतालाई पहिले नै उल्लेख गर्नु भएको छ। ने. का. र ने. क. पा. को यस संबंधो दृष्टिकोणमा अंतर गर्दै उहाँले लेख्नुभएको छ, "ने. क. पा. ले राष्ट्रियता र प्रजातन्त्रको प्रश्नलाई अभिन्न रूपले हेर्दै प्रजातान्त्रिक आन्दोलनको नीति लियो। नेपाली कांग्रेसका नेताहरूले राष्ट्रियताको प्रश्न प्रति आँखा चिंली एकहोरो रूपमा प्रजातन्त्रको प्रश्न मात्र साम्ने ल्याए।" ( मूलबाटो, पृष्ट ३८ ) 'मूलबाटो' छाडेर 'सही मूलबाटो', अर्थात् कथित नयाँ जनवादी कार्यक्रम, समात्ने बेलामा उहाँले ठीक त्यही तरीका अपनाउन पुग्नु भयो। जसकालागि कुनै दिन उहाँले ने. का. को आलोचना गर्नु भएको थियो– राष्ट्रियता प्रति "आँखा चिंली" एकहोरो रूपमा प्रजातन्त्रको प्रश्न मात्र साम्ने ल्याउनु भयो। सही मूलबाटो'मा उहाँले राष्ट्रिता प्रति त्यति स्पष्ट दृष्टिकोण राख्नु हुन्न जति मूलबाटोमा राख्नु हुन्थ्यो। यो उहाँको सोंचाईमा क्रमशः बढ्दै गएको भारतीयकरण वा कांग्रेसीकरणको परिणाम हो।

नेपाल कम्युनिष्ट पार्टीले 'वर्तमान अन्तर्राष्ट्रिय र राष्ट्रिय परिस्थितिका विशेषताहरू'मा लेखेको छ, "प्रत्येक देशको क्रान्ति र जनवादी संघर्ष चलाउन सर्वप्रथम विश्वको मुख्य धार ठम्याउनु नीतान्त आवश्यक हुन्छ। यसमा कुनै किसिमको भट्कावले रणनीति र कार्यनीतिमा भट्काव ल्याउँछ।" यसरी कुनै पनि देशको आन्तरिक स्थितिको विश्लेषण, कार्यक्रम वा नीति त्यो वेला संम साफ हुँदैन, जब संम आजको विश्वको परिस्थितिका मुख्य विशेषताहरू बारेमा नै हाम्रो दिमाग साफ हुदैन। 'मूलबाटो' मा स्वयं पी. एल. ले पनि यो कुरा स्वीकार गर्नु भएको छ। "अंतर्राष्ट्रिय परिस्थितिबाट अलग हामीले आपनो देशको स्थितिको मूल्यांकन गर्दा त्यो मूल्यांकन एकहोरो भई अपूर्ण हुन जाने छ। यस्तो एकांगी मूल्यांकनको आधारमा लिएको नीति सही हुन सक्तैन···अतः हामीले आफ्नो देशको स्थितिको मूल्यांकन अन्तर्राष्ट्रिय स्थितिको पृष्टभूमिमा नै गर्नु पर्छ।" ( पृष्ट १३ )

उहाँले कुरा ठीक भन्नु भएको छ, तर उहाँको कमजोरी यो छ कि आजको युगको मूल्यांकन संबंधी उहाँको समझदारी बारे नै उहाँको दिमाग साफ छैन। फलतः उहाले गरेको आफ्नो देशको स्थितिको मूल्यांकन एकहोरो र अपूर्ण हुन गएको छ तथा उहाँले लिएको नीति गलत। सबै भन्दा मुख्य कुरा उहाँले यो बुझ्न सक्नु भएको छैन--आजको विश्वको मुख्य अन्तविरोध के हो? नेपाल कम्युनिष्ट पार्टीले यस संबंधी आफ्नो दृष्टिकोण साफ गर्दै लेखेको छ, "संशोधन-वादीहरू के भन्छन् भने सबै अन्तर्विरोधको केन्द्र बिन्दु समाजवादी देशहरू र साम्राज्यवादी देशहरूका वीचको अन्तरविरोध नै हो। विश्वको मुख्य धार संबंधी यो गलत स्थापनाले यी संशोधनवादीहरू क्रान्तिकारी जन समुदायवाट छुट्टिएर पूजीवादी शोषक वर्गका नयाँ सेवक हुन पुगेका छन्। अध्यक्ष माओले शिक्षा दिनु भएको छ, दोस्रो महायुद्धको समाप्ति पछि विश्वको अन्तर्विरोधहरूको केन्द्र बिन्दु फरक भएको छ। आज विश्वका अन्तर्विरोधहरूको केन्द्र विन्दु एसिया, अफ्रिका तथा ल्याटिन अमेरिकाका शोषित पीड़ित जनता र साम्राज्यवादका बीचको अन्तर्विरोध नै हो।" ( राजनैतिक दस्तावेजहरू, पृष्ठ २७ ) पी. एल. को 'कार्यक्रम'मा 'हाम्रो युगको मूल्यांकन' गर्दा विभिन्न प्रकारका अन्तर्विरोधको चर्चा गरिएको छ। तर तिनीहरू मध्ये कुनमा विशेष रुपले जोड़ दिने? यो कुरा बताइएको छैन। फलतः उहाँले एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका जनताको सामाज्यवाद विरोधी संघर्षको क्रान्तिकारी महत्वलाई सही किसिमले बुझ्न सक्नुभएको छैन। यो भूभागको राष्ट्रिय मुक्ति आन्दोलन र साम्राज्यवादका वीचको अन्तर्विरोधलाई खालि सामान्य प्रकारले चर्चा गरेर यथार्थमा उहाँले यसको महत्त्वलाई घटाउनु

भएको छ र त्यसरी संशोधनवादीहरूको स्थानमा उभिन पुग्नु भएको छ।

संशोधनवादीहरूले साम्राज्यवाद तथा एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका जनताका बीचको अन्तर्विरोधलाई गौण ठहराउँछन्, र उनीहरूको शब्दमा, समाजवाद र पूँजीवादका बीचको अन्तर्विरोध नै प्रधान अन्तर्विरोध हो। उदाहरणका लागि, भारतीय कम्युनिष्ट पार्टी ( डाँगेगुट ) का दस्तावेजहरूमा स्पष्ट शब्दमा स्वीकार गरिएको छः विश्व समाजवादी व्यवस्था तथा विश्व पूँजीवादी व्यवस्थाका बीचको अन्तर्विरोध नै "आजको युगको अन्तर्विरोधहरूको केन्द्र हो" उनीहरूले यो पनि भनेका छन्, "साम्राज्यवाद र राष्ट्रीय मुक्ति आन्दोलनहरूका बीचको" अन्तर्विरोधहरूलाई "आजका युगको प्रधान अन्तर्विरोध" संझनु गलत हो; "विश्व-क्रान्तिको केन्द्र एशिया, अफ्रिका र ल्याटिन अमेरिकाको विशाल भूभाग" हुन गएको छ भनेर संझनु पनि सही होइन।

( Procedings of the Seventh Congress of the C. P. I, Bombay, 1964, Page 82 )

चीनको कम्युनिष्ट पार्टीको केन्द्रीय कमिटीद्वारा प्रकाशित अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनको आम दिशा बारे एक सुझावमा भनिएको छ, "वर्तमान विश्वका विभिन्न प्रकारका अन्तर्विरोध एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका विशाल क्षेत्रहरूमा केन्द्रित छन्; यी क्षेत्र साम्राज्यवादी शासनका अधीनका सबै भन्दा कमजोर क्षेत्र हुन् तथा विश्वक्रान्तिका यस्ता तूफानी केन्द्र हुन्, जस्ले साम्राज्यवाद माथि सीधं प्रहार गर्दछन्......यस प्रकारले अन्तर्राष्ट्रिय सर्वहारा क्रान्तिको संपूर्ण कार्य एक तरहले यी क्षेत्रका जनताको, जो दुनियाको आवादीको बहुसंख्यक भाग हो, क्रान्तिकारी संघर्षको परिणाम माथि निर्भर गर्छ।

"आज केही मानिस यतिका अगाड़ि बढ़ेका छन् कि उनीहरूले एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका जनताको साम्राज्यवाद विरोधी क्रांतिकारी संघर्षको भारी अन्तर्राष्ट्रिय महत्वलाई अस्वीकार गर्छन्......वास्तवमा यस्ता मान्छेहरूले साम्राज्यवादका आवश्यकताहरूलाई पूरा गर्छन्.......ती मानिसहरूले वास्तवमा एकाधिकार पूंजीवादका हितहरूको रक्षा गरिरहेका छन् र सर्वहारावर्गका हितहरु प्रति गद्दारी गरिरहेका छन् र पतीत भएर सामाजिक जनवादी वनि रहेका छन्।"

"एशियायी, अफ्रिकी र ल्याटिन अमेरिकी देशहरुका क्रान्तिकारी संघर्षहरु प्रति अपनाइएको दृष्टिकोण क्रान्ति चाहने वाला र क्रान्ति न चाहनेवालाहरुको बीच अन्तर गर्ने.......महत्व पूर्ण कसौटी हो।"

एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका जनताको साम्राज्यवाद विरोधी संघर्षहरुमा नै विश्वका सबै अन्तर्विरोधहरु, 'केन्द्रित' भएका छन् भनेर स्पष्ट शब्दमा स्वीकार न गर्ने 'त्यस्ता मान्छेहरु' मध्येमा पी. एल. जी पनि हुनुहुन्छ।

उहाँले यो तथ्यको आफ्ना दस्तावेजहरूमा उल्लेख गरेको पाइन्न। त्यसरी उहाँले अप्रत्यक्ष रूपले डाँगेहरूको मतलाई नै स्वीकार गरी "साम्राज्यवादका आवश्यकताहरू" लाई नै पूरा गरिरहनु भएको छ र त्यसरी चीनको पार्टीको पत्रमा लेखिए झैं सर्वहारा वर्गका हितहरू प्रति "गद्दारी" गरिरहनु भएको छ। आजको युगको एउटा "महान ऐतिहासिक धारा"—राष्ट्रिय जनवादी क्रान्तिकारी आन्दोलन प्रति सही समझदारीको अभाव वा आजको "विश्वको मुख्य धार" वा प्रधान अन्तर्विरोधलाई सही किसिमले ठम्याउन न सक्नुको परिणाम यो भएको छ कि नेपालको जनवादी क्रान्तिको साम्राज्यवाद विरोधी पहलु प्रति उहाँले सही समझदारी बनाउन सक्नु भएको छैन। जहाँ सम्म सामान्य रुपमा राष्ट्रिय स्वतंत्रता आन्दोलनको महत्वलाई स्वीकार गरेर औपचारिकता पूरा गर्ने प्रश्न छ; त्यो त संशोधनवादीहरूले पनि गर्दैनन् भन्ने होइन। भारतीय कम्युनिस्ट पार्टी ( डाँगे गुट ) को उही दस्तावेजमा भनिएको छ, "राष्ट्रिय स्वतंत्रता आन्दोलनहरूले साम्राज्यवाद माथि कड़ा चोट गरी रहेका छन्।" तर एशिया, अफ्रिका र ल्याटिन अमेरिकाका देशहरू आज विश्व क्रान्तिका "तुफानी-केन्द्र" भएका छन् भन्ने कुरा स्वीकार गर्न उनीहरू तयार छैनन्। पी. एल ले पनि आफ्ना दस्तावेजमा 'दक्षिण पूर्व एशिया, अफ्रिका र ल्याटिन अमेरिकाली देशहरूमा क्रान्तिकारी आन्दोलन सशस्त्र संघर्षको रूप लिई प्रबल वेगले अगाड़ि बढ्दछ" भनेर अवश्य स्वीकार गर्नु भएको छ। तर त्यो भन्न सक्नु भएको छैन, जो डांगेहरूले भनेका छैनन् कि यही भूभागका जनताको क्रान्तिकारी आन्दोलन विश्व क्रान्तिको केन्द्र भएको छ।

उहाँहरूको 'कार्यक्रम' मा लेखिएको छ, "मुख्य अन्तर्विरोधलाई छुट्टाई मुख्य शत्रुलाई छुट्टाउनु र आजको स्थितिमा मजदूरवर्ग सित सामान्य अन्तर्विरोध राख्ने वर्ग तथा वर्गीय स्तरहरूलाई पनि क्रान्तिको पक्षमा तान्न कार्यनीतिको सही संचालन गर्न सक्नुमा नै क्रान्तिको विजय भर पर्छ।" ( पृ० ७२ ) जब कि विश्वको मुख्यअन्तर विरोधसंबन्धी उहाँको सोंचाई नै सही ठाँउमा छैन, देशभित्र 'मुख्य अन्तरविरोधलाई छुट्टाई मुख्य शत्रुलाई छुट्टाउनु' तथा 'कार्यनीतिको सही संचालन गर्न सक्नु' उहाँकालागि कसरी संभव हुन सक्छ ?

– ९ –

पी. एल. गुटले यो प्रश्न निकै नै उठाएको पाईन्छ: आजको मूख्य दुश्मन को हो ? उनीहरूले प्रचार यो गर्दछन कि यो प्रश्नका पछाडिको उद्देश्य राजालाई मूख्य दुश्मन ठहराउनु हो। तर होईन, यस्का पछाडिको उनीहरूको उद्देश्य ने. का. लाई गौण दुश्मन वा मित्र शक्ति ठहरयाउनु हो। उनीहरूले ती सबैसित दुश्मनीको घोषणा गर्दछन, जस्ले ने. का. लाई दुश्मनको क्याम्पमा राख्दछन वा ने. का. लाई राजाको पंक्तिमा राख्दछन। उनीहरूको ने. का. भक्तिले यति चरम

र विकृत रूप लिएको छ कि तिनीहरूले ती सबैसित कुनै पनि अवस्थामा एकता संभव देख्दैनन् जस्ले ने. का. लाई राजा सरह दुश्मन ठान्दछन।

आजको देशको परिस्थितिमा राजालाई कुन प्रकारको दुश्मन समझने? यो प्रश्न साधारणतया एकातिर साम्राज्यवाद, विशेषत: भारतीय एकाधिकारका तुलनामा उठाईन्छ, अर्कातिर ने. का. का तुलनामा। पहीलो प्रशंगमा पी. एल. ले आफ्नो मत यसरी ब्यक्त गर्नु भएको छ, "नेपालको ऐतिहासिक स्थितिलाई हेर्दा आज पनि हाम्रो समाजको मूल अन्तरविरोध (१) साम्राज्यवादको साथै भारतीय एकाधिकार पूँजीवाद र नेपाली जनताको बीच तथा (२) सामन्तीशाही हुकुमी ब्यवस्था र अन्य तमाम जनवादी क्रान्ति पक्षीय समुदाय ( उहाँले ने. का. लाई पनि जनबादी क्रान्ति पक्षीय शक्ति सम्झनु हुन्छ—लेखक ) बीचमा छ। आज यो मूख्य अन्तरविरोध शत्रुता पूर्ण र समस्त अन्तर विरोधहरू गौण अर्थात सामान्य भएर गएका छन''''''एउटै स्थितिमा र एउटै समयमा मुख्य अन्तरविरोध दुई वा दुई मन्दा बढी हुन सक्दैन।''''''सामन्ती ब्यवस्थाको पृष्ठपोषक राजतन्त्र र जनता बीचको अन्तर विरोधले आज मुख्य अन्तर विरोध ( त्यसको अर्थ भयो, उहाँले साम्राज्यवादका साथै भारतीय एकाधिकार सितको अन्तर-विरोधले आज गौण रूप लिएको छ भनेर मान्नु हुन्छ—लेखक ) को रूप लिएको छ" (कार्य-क्रम, पृ० ५८-९)

हो, एउटै समयमा एउटै अन्तर विरोध प्रधान हुन्छ। पी० एल० गुटले यो कुरामा पनि निकै जोड़ दिएको पाइन्छ कि एउटा समयमा देशी सामन्तवाद र विदेशी साम्राज्यवाद मध्ये एउटै सितको अन्तरविरोध प्रधान हुन्छ र अर्कासितको अन्तरविरोध अनिवार्य तर गौण। माओले वेग्लावेग्लै प्रकारको परिस्थितिमा कुनै बेला विदेशी साम्राज्यवादको शक्तिसित र कुनै वेला देशीय साम्राज्यवादी शक्तिहरू सितको अन्तरविरोध मुख्य भएको कुरा बताउनु भएको छ। तर उहाँले सबै प्रकारको परिस्थितिमा ती दुई मध्ये एउटासितको अन्तरविरोध अनिवार्यत: गौण हुनुपर्दछ र हुन्छ भनेर कहीं भन्नु भएको छैन। झन उहाँले यस्तो परिस्थितिको पनि चर्चा गर्नु भएको छ जब, "विदेशी साम्राज्यवाद र घरेलु प्रतिक्रियावाद खुला रूपले एका पट्टि उभिन्छन जव कि जनसमूह अर्कातिर" ( M.o Four Essays on Philoshophy, P. 53 ) त्यो शिलशिलामा उहाँले बताउनु हुन्छ : त्यस्तो अवस्थामा साम्राज्यवाद र देशीय प्रतिक्रियावाद दुवैका विरुद्धको जन समूहको अन्तरविरोधले नै प्रधान अन्तरविरोधको रूप लिन्छ ( उही पृ० ५३ ) त्यस्तो अवस्थामा यिनीहरू दुई मध्ये कसैसितको अन्तरविरोधलाई गौण भन्ने कुरो आउँदैन।

स्वयं पी. एल. ले पनि एक ठाऊमा लेख्नु भएको छ, "आजको हाम्रो मूख्य

दुश्मन सामन्तवाद र साम्राज्यवाद र भारतीय पूँजीवाद हो" ( कार्यक्रम पृ. ७३ ) उहाँले जे भन्नुभएको छ त्यसबाट प्रस्ट हुन्छ कि उहाँले यहाँ भनेको यो कुरा खालि प्रचारको लागि मात्र हो, व्यवहारमा उहाँले पुँजिवाद र भारतीय साम्राज्यवादलाई "आजको हाम्रो मूख्य दुश्मन" ठान्नुहुन्न उहाँका दस्तावेजहरुमा नेपालमा भैरहेको औपनिवेशिक शोषणको लेखाजोखामा जुन उपेक्षा गरिएको छ, त्यसबाट पनि उक्त कुरा प्रस्ट हुन्छ । तर उहाँको भनाईले कम से कम स्वयं उहाँहरुकै एउटै समयमा एक भन्दा बढी मुख्य दुश्मन हुन सक्दैनन् भन्ने बहुचर्चित तर्कको खण्डन हुन्छ । एक समयमा एक भन्दा बढी अन्तर विरोध हुन सक्दैन तर जहाँ सम्म मूख्य दुश्मनको प्रश्न छ, ती एकभन्दा बढी पनि हुन सक्दछन, स्वयं माओले नै कतिपय प्रशंगमा यस प्रकार का कुराहरुको चर्चा गर्नु भएको छ । पी. यल. गुटले माओको एउटा समयमा एउटै मूख्य अन्तरविरोध हुन्छ भन्ने विचारलाई एउटा समयमा एउटै मूख्य दुश्मन हुन्छ भन्ने विचारको रुपमा प्रचार गर्दछन ।

नेपालको आजको खास सन्दर्भमा मूख्य अन्तरविरोध के छ ? माओले भन्नु हुन्छ : जब साम्राज्यवादले कुनै देश माथी आक्रमण गर्दछ, साम्राज्यवाद र सम्बन्धित देशका बीचको अन्तरविरोध मूल अन्तरविरोध हुन्छ । जब कि देश भित्र विभिन्न वर्गहरुका बीचका सबै अन्तर्रविरोधहरु ( पहिलेको सामन्ती व्यवस्था र विशाल जन समूहका बीचको प्रधान अन्तरविरोध समेत ) ले गौण स्थान लिन पुग्दछन ( Mao, Four Essays .... .... .... .... P. 52 ) यो भनाईलाई आज दुई प्रकारले गलत ब्याख्या गरिएको छ । एक थरले राजालाई राष्ट्रवादी तत्व बताएर राजा र जनताका बीचको अन्तरविरोधले गौण रुप लिन पुगेको छ भन्दछन । निश्चय नै उनीहरुले यो भनाईलाई खुलारुपमा राख्ने हिम्मत गर्दैनन्, यद्यपि यो कुरा बेग्लै हो कि व्यवहारमा उनीहरुले त्यही नीतिको अनुशरण गर्दछन । यस प्रकारको बिचार खास गरेर यस. आर. को छ, अर्कातिर पी. एल. ले आज नेपाल माथी कतैबाट आक्रमण भएको छैन भनेर साम्राज्यवादका साथै भारतीय एकाधिकार सितको अन्तरविरोधलाई गौण रुपमा राख्नु हुन्छ ।

माओले अगाडि लेख्नु भएको छ, "जब क्रान्तिकारी गृहयुद्धले साम्राज्यवाद र त्यसको पिछ लग्गु कुकुरहरूको अस्तित्वमा नै खतरा पुग्ने हद सम्म विकाश गर्द छ, घरेलु प्रतिक्रियावादीहरू साम्राज्यवादले आफ्नो सत्ता कायम राख्न या त क्रान्तिकारीहरूको मोर्चामा भित्रबाट फुट पारी दिन्छ, या घरेलु प्रतिक्रयाबादीहरूलाई मद्दत गर्न खुला प्रकारले फौज पठाउँछ । यस्तो अवश्थामा बिदेशी साम्राज्यवाद र घरेलु प्रतिक्रयावाद एकदम खुला प्रकारले एकापट्टि अभिन्छन, जब कि जन-समूह अर्कातिर । यसरी प्रधान अन्तरबिरोध बन्छ, जस्ले अन्य अन्तर-

विरोधलाई निर्धारित वा प्रभावित गर्छ" ( उही पृ० ५३ )

माथीको भनाई कहाँ सम्म नेपालमा लागु हुन सक्दछ ? त्यस बारे कैयो दृष्टिले विचार गर्नु पर्द छ । नेपालमा क्रान्तिकारी गृह युद्ध यस अवस्था सम्म बढेको छैन कि देशीय वा बिदेशी प्रतिक्रयावादीहरूको अवस्थामा नै खतरा पुगोस । तर नेपालमा "आन्तरिक सामाजिक अन्तरविरोध र अन्तर्राष्ट्रिय वर्गसंघर्ष" तीव्र भएको छ । देशभित्र बामपन्थी शक्तिहरूको स्थिति संगठनात्मक दृष्टिले कमजोर भए तापनि राजनैतिक दबाव, दक्षिण-पूर्वी एशियामा बढदो वर्ग-संघर्ष र उत्तरमा जनवादी चीनका क्रान्तीकारी नीतिहरूले गर्दा नेपालमा देशीय र विदेशी प्रतिक्रयावादी हरूले आफ्नु अस्तित्वमा खतरा पुग्दै गईरहेको देखी रहेका छन् ।

नेपालमा प्रत्यक्ष रुपले विदेशी सेवा धुसेको छैन तापनि पाकिस्तान माथिको भारतीय आक्रमण पछि दक्षिण-पूर्वीय एशिया का सबै देशहरू मुख्यतः नेपालका अगाडि गम्भीर खतरा उपस्थित भएको छ । नेपाल एक प्रकारले भारतीय सेनाको घेराबन्दीको अवस्थामा छ । यदि भारतले नेपालमाथी खुल्ला आक्रमणको नीति अपनाएको छैन भने अन्य कतिपय कारणका साथै यस कारणले मात्र कि उस्ले विना आक्रमण नै नेपालवाट ती सबै सुविधाहरू लिदै गैरहेको छ, जो पूर्वी बंगालमा आक्रमण पछि मात्र उस्ले प्राप्त गर्न सकेको थियो ।

नेपालमा पंचायती व्यवस्था र भारतीय एकाधिकार बीचको गठबन्धनले झन २ मजबूत र खुला रूप लिदै छ । देशभित्र पंचायती ब्यवस्था र साम्राज्यवाद, विशेषत: भारतीय एकाधिकार एकापट्टि र विशाल जनसमूह अर्कातिर बन्दै गैरहेका छन् । त्यसले गर्दा एकाधिकार सामन्तवाद र साम्राज्यवाद, विशेषतः भारतीय एकाधिकार, अर्कातिर, बिशाल जनसमूहका बीचको अन्तरविरोधले नै प्रधान अन्तरविरोधको रुपलिएको छ ।

— १० —

नेपाली कांग्रेसको तुलनामा राजालाई कुन प्रकारको दुश्मन ठान्ने ? यो प्रश्न बारे पी. एल. ले मुख्यत: दुई प्रकारका तर्कहरू दिएको पाईन्छ : प्रथम, जो सत्तामा छ त्यही नै मुख्य दुश्मन हुन्छ, दोस्रो, राजा सामन्ती र ने. का. पूंजीबादी शक्ति भएकाले जनवादी क्रान्तिको कालमा ने. का. क्रान्तिको सहायक शक्ति हुन्छ । तर केही विश्लेषण गरेर हेर्ने वित्तिकै हामीले पाउने छौं कि उहाँ स्वयं आफ्नै तर्कहरूको भुल-भुलैयामा अल्मलिनु भएको छ जो सत्तामा छ, त्यही नै मूख्य दुश्मन हुन्छ भन्ने तर्क सबै प्रकारको परिस्थितिमा लागु हुन्न । यदि त्यो सिद्धान्तलाई मान्ने हो भने, चाहे विदेशी आक्रमणको अवस्थामा किननहोस् माओले च्याङ्ग-काई-सेक सित अपनाएको सम्झौताको नीति गलत

ठहर्नेछ। यदि ने. का. पूँजीवादी पार्टी भएकोले त्यो गौण दुश्मन हुन्छ भन्नु हुन्छ भने भोलि ने. का. सत्तामा गयो भने सामन्त वर्गको तुलनामा त्यो कुन प्रकार-को दुश्मन हुने छ ? सत्तामा भएकाले त्यसलाई प्रधान दुश्मन सम्झेर सामन्त बर्ग-लाई गौण दुश्मन ठानिन्छ भने जनबादी क्रान्तिको कालमा पुँजीपति, मूख्यत: राष्ट्रीय पुँजिपति वर्गको तुलनामा सामन्ती शक्ति सितको विरोधलाई प्राथमिकता दिने सिद्धान्तको बिपरीत हुन्छ। यदि ने. का. लाई गौण दुश्मन ठानिन्छ भने जो सत्तामा छ त्यसलाई प्रधान दुश्मन ठान्ने सिद्धान्तको बिपरीत हुने छ। त्यसरी उहाँले जुन सिद्धान्तको प्रतिपादन गरीरहनु भएको छ, खालि आफ्नो पूर्वा-ग्रह र ने. का. परस्त सोंचाईलाई सही प्रमाणित गर्न को लागि मात्र ती सिद्धान्त-को आधारहरूमा आफ्नो कर्तब्य निर्धारित गर्न होईन। आज जो सत्तामा छ, त्यै नै प्रधान दुश्मन हुन्छ भनेर ने. का. सितको अन्तर विरोधलाई गौण ठहऱ्याउन प्रयत्न गरेझैं-भोलि ने. का. सत्तारुढ़ भयो भने—पुन: जनवादी क्रान्तिको कालमा पूँजीपति वर्ग सितको अन्तर विरोध गौण हुन्छ भन्ने कुरा अगाडि सारेर ने. का. सितको अन्तरविरोधलाई गौण ठहराउने प्रयत्न गरिने छ। डांगे हरूले त्यही किसिमको भारतीय सत्तारूढ़ कांग्रेस सितको अन्तरविरोधलाई गौणरूप दिनपुगेको उदाहरण हाम्रा अगाडि छ।

को प्रधान दुश्मन हो र को गौण ? सर्व प्रथम यो कुरा बर्गीय अर्थात वस्तुगत आधारमा छुट्याउन पर्दछ। लेनिनले 'सम्झैता बारे' मा पुँजोपति बर्ग लाई 'प्रत्यक्ष र मुख्य वर्ग दुश्मन' र निम्न पूँजिपति वर्गलाई 'निकटतम बर्गदुश्मन' बताउनु भएको छ। नेपालको स्थितिमा सामन्त नौकरशाही र दलाल पुँजिपति वर्ग नै प्रत्यक्ष र मुख्य वर्ग-दुश्मन हुन, जब कि पुँजिपति बर्ग, मुख्यत: राष्ट्रीय पूँजिपति गौण वर्ग दुश्मन कोही सत्तामा वा बाहिर भएको कारणले जनवादी क्रान्तिको कालमा यो बर्गीय स्थितिमा कुनै अन्तर आउँदैन। समान वर्गीय स्थिती भएका विभिन्न प्रतिक्रियावादी गुटहरू प्रति उनीहरूका बीचमा भएको आत्मगत--राजनैतिक प्रभाव शक्ति वा नीति संबन्धी--अन्तर माथी ध्यान दिदै उनीहरू प्रतिको नीतिमा सामान्य प्रकारको अन्तर गर्नु पर्ने आवश्यकता हुन्छ। तर यो तात्कालिक राजनीतिसित संबन्धित कुरा हो र त्यसबाट मूल बर्गीय विश्लेषणमा कुनै अन्तर आउँदैन--

## – ११ –

पी० एल० गुटले राजा र ने० का० दुवैलाई दुश्मन सम्झने विचारलाई सिद्धान्त नै गलत बताउँछन। अझ उनीहरूले यहाँ सम्म भन्दछन् विश्व कम्युनिष्ट आन्दोलनमा कहीं पनि यस्तो भएको छैन रे !

ठीक यही प्रकारको प्रश्न रूसमा लेनिनहरूका विरुद्ध मेन्सेविकहरूले उठाएका थिए। आधा शताब्दी भन्दा पहिले लेनिन र स्टालिनहरूले त्यसको जवाफ दी

सक्नु भएको छ। त्यो वेला बोल्सेविकहरूले जारशाही, जो सत्तामा थियो, र उदारवादी पूँजिपति वर्ग तथा उनीहरूको पार्टी 'क्याडेटहरू' जो सत्तामा थिएन, दुवैका विरुद्ध संघर्ष गरिरहेका थिए। त्यो नीतिका विरुद्ध मेन्सेविक नेता चेरे-- मानिनको मतलाई यसरी स्टालिनले आफ्नो एउटा लेखमा उद्धृत गर्नुभएको छ, "जस्तो कि केही मानिसहरूले कुरागर्छन ( यो संकेत लेनिन तर्फ हो--लेखक ) सर्वहारा वर्गकालागि किसान वर्गको साथलिएर सार्वभौमिक र लोकप्रिय संविधान सभाको निमित्त सरकार र पुँजिपति वर्ग दुवैका विरुद्ध संघर्ष गरी रहेका थिए। त्यो नीतिका विरुद्ध संघर्षमा उत्रनु बेकुफी र पागलपन हुनेछ" ( Works J. V. Stalin, Vol. 2 Moscow 1953, P. 6–7 ) ठीक त्यही प्रकारको कुरा आज पी॰ एल्. ले गरीरहनु भएको छैन ? त्यो मेन्सेविक धारणालाई स्पष्ट गर्दै स्टालिनले लेख्नु हुन्छ ; निरंकुश राजतन्त्रका विरुद्ध पूँजीपति वर्गसित त्यस प्रकारको एकता फ्रान्सको परिस्थितिमा नैं ठीक हुन्थ्यो, जुन बेला उ क्रान्तिको पक्षमा आउने सम्भावना थियो र आएको पनि थियो तर रूसमा जबकि पुंजीपति वर्गले क्रान्तिको सट्टा प्रतिक्रान्तिको पक्ष लिंदै गै रहेको थियो, उसित त्यसप्रकार-को एकता गलत हुन्थ्यो। मेन्शेविकहरूको मतानुसार "उदारवादी पूँजिपति वर्ग र त्यसका च्याम्पीयन क्याडेटहरूलाई आजको क्रान्तिमा गद्दार भन्न सकिन्न र तिनीहरू क्रान्तिका सहयोगी हुन" ( उही पृ० ६ ) त्यो भनाईले स्पष्ट गर्दछ कि कुनै देशमा निरंकुश सत्ताको वेला त्यस्तो विरोधी र सत्ताभन्दा बाहिर भएको कारणले मात्र उसंग स्वतः एकताको कुरा गर्नु सही नीति होईन। यो कुरा संबन्धित देशको पूँजिपति वर्गको चरित्रको विश्लेषण गरेर नै टुंङ्याउनु पर्दछ। जुन कुरा फ्रैंच क्रान्तिको वेलामा त्यहाँको पूँजिपति वर्गको बारेमा सत्य थियो, त्यो रूसमा सत्य हुन सकेन। स्वयं मार्क्सले पनि प्रसियाको पूँजिपति वर्गलाई फ्रान्सको १७८९ को पुंजीपति वर्गभन्दा बेग्लै कोटीमा राख्नु भएकोछ। त्यसमाथी पी० एल० को विचित्रता यस्मा छ कि उहाँले निरंकुश राजतन्त्रको विरोधमा सामन्त र दलाल पूँजिपति वर्गको पार्टी ने० का० लाई, जस्ले सधैं प्रतिक्रान्ति र गद्दारीको बाटो समात्दै आएको छ, क्रान्तिको सहयोगी सम्झनु हुन्छ।

नेपालको परिस्थिति मा सामान्यतः पूँजिपति वर्गलाई, मुख्यतः त्यस्को अंग राष्ट्रीय पूँजिपति वर्गलाई क्रान्तिको सहयोगी नै मान्नु पर्दछ। तर जहाँ सम्म ने. का. को प्रश्न छ, त्यस्ले पूँजिपति वर्गको सबभन्दा प्रतिक्रियावादी भाग दलाल पूंजीपति वर्ग र सामन्त वर्गको प्रतिनिधित्व गर्दछ। त्यस्ले क्रान्ति होईन प्रति क्रान्तिको बाटो समातेको छ। उस्को त्यो चरित्र माथी ध्यान नदिई कन उस्ले पञ्चायती व्यवस्थाको विरोध गरेको कारणले अझ एउटै समयमा दुई दुश्मनसित संघर्ष गर्न हुँदैन भन्ने तर्कका आड़मा – उस्लाई दुश्मन क्याम्पमा राख्न अनकना-

उन मेन्सेविक धारणा नै हो । रूसको पूँजिपति वर्गको चरित्र बारे काट्स्की, जो अझै गद्दार बनिसकेका थिएनन्, को मत स्टालिनले यसरी उद्धृत गर्नु भएको छ । रूसी पूँजिपति वर्गले "निशन्देह राजतन्त्रलाई घृणा गर्दछ, तर त्यसले क्रान्तिलाई त्यो भन्दा बढ़ी घृणा गर्दछ........जहाँ सम्म यस्ले राजनैतिक स्वतन्त्रता चाहने प्रश्न छ, यो त्यसले यस कारणले चाहन्छ कि त्यसले यसलाई क्रान्तिलाई अन्त-गर्ने साधन ठान्दछ........" ( उही पृ० ९-१० ) ने. का. बारे त्यो भनाई कति राम्ररी लागु हुन्छ ? त्यसकारण आज हामीले रूसमा बोल्सेविकहरूले अपनाए झैं नीति अपनाउनु पर्दछ । राजा र ने. का. दुवैका विरुद्ध संघर्षमा उत्रने ।

स्तालिनले लेख्नु भएको छ, "दुमा दुई भागमा विभाजित भएकोछ : जन-संघर्षका दुश्मनहरूको क्याम्प तथा जन संघर्षका समर्थकहरूको क्याम्पमा । पहिलो क्याम्पमा ब्लेक हन्ड्रेड अक्टोवरवादीहरू स्टोलिपिन ( जारशाहीको मन्त्री-लेखक ) क्याडेटहरू र अरू छन्, दोश्रो क्याम्पमा सामाजिक प्रजातन्त्रवादीहरू ( कम्युनिष्टहरू—ले. ) समाजवादी क्रान्तिकारीहरू ट्रभोडोमिक्सका बहुमत र अरु छन् ।" (उही पृ० २५ ) के यो भनाईबाट पनि एउटै समय एक भन्दा बढ़ी दुश्मन मान्ने विचार विश्व कम्युनिष्ट आन्दोलनका महान नेताहरूले मान्दै आएको कुरा सही देखिन्न ।

लेनिनले पनि आफ्नो प्रसिद्ध रचना 'दूई कार्य नीति' मा त्यसप्रकारको मेन्सेविक धारणा माथी तीव्र हमला गर्नुभएको छ । जस्तो कि लेनिनले आफ्नो पुस्तकमा उद्धृत गर्नुभएको छ, एउटा मेन्सेविक पत्रमा यस प्रकारको विचार प्रकट गरिएकोछ, "आगामी क्रान्ति पूँजिवादी क्रान्ति हो-यस्को उद्देश्य वर्तमान व्यवस्थामा यस्ता परिवर्तनहरू ल्याउनुहो, जो खालि सर्वहारा वर्गको मात्र होइन. पुरै पूँजिवादी समाजका हीतमा छन् । यी सबै वर्गहरू स्वयं पूँजिपतिहरू पनि सरकारका विरुद्ध छन्, क्रान्तिकारी सर्वहारा वर्ग र क्रान्तिकारी पूँजिपति वर्ग एक प्रकारले संग सँगै अगाडि बढ़िरहेका छन् र निरंकुश राजतन्त्र माथि बेग्लाबेग्लै दिशाबाट प्रहार गरिरहेका छन् । सरकार पुरै नै एक्लो परेकोछ र जनताको सहानुभूति गुमाएको छ । त्यसकारण यसलाई खतम गर्नु धेरै नै सजिलो छ, रूसी सर्वहारा वर्ग पुरै नै यो क्रान्तिलाई एक्लै अगाडि बढाउनको लागि वर्ग सचेत र संगठित भै सकेको छैन । यदि यो यसो गर्न सक्ने भए पनि यस्ले सर्व-हारा ( समाजवादी ) क्रान्तिलाई अगाडि बढाउँथ्यो, पूँजिवादी क्रान्तिलाई होईन । यस कारण यो हाम्रो हीतमा छ कि सरकारको कुनै सहयोगी नरहोस् कि यो विरोधीहरूका बीच फुट पार्न असमर्थ रहोस्, पूँजिपति वर्गसित हात मिलाउन नपाओस र सर्वहारा वर्गलाई एक्लो पार्न नपाओस् ।" ( Lennin Colleeted works Vo. 9, Moscow, 1964, P.62 )

मेन्सेविकहरूको जोड यस कुरामा थियो कि पार्टीले जारशाही र पूँजिपति वर्ग दुवैका साथ एकै साथ संघर्ष चलाउन हुँदैन, जारशाही विरोधी संघर्षमा पूँजिपति वर्गसित एकताको नीति अपनाउनु पर्छ। लेनिनको नीतिलाई, उनीहरूले प्रजातान्त्रिक क्रान्तिको विरुद्ध ठहराए। लेनिन उनीहरूको "पूँजिवादी क्रान्ति" को धारणालाई "दम्भपूर्ण पिछलग्गु व्याख्या"मा अलमलिएको बताउनु भयो। उहाँले अगाडि लेख्नुभएको छ : त्यो मेन्सेविक पत्रले "सर्वहारा वर्ग प्रजातान्त्रिक क्रान्तिमा एक्लो पर्ने सम्भावना बारे विचार-विमर्स गर्दछन्, एउटा सानो कुरा··· विर्सन्छ········किसान वर्ग" ( उही पृ० २६ ) यस्को लागी उहाँले उनीहरूको आलोचना गर्नु भयो कि उनीहरूले जमीनदार र पूँजिपति वर्गको एकतामा त्यतिका जोडदिए, तर किसान वर्गको ख्याल गरेनन्। त्यस्कारण उनीहरूले सर्वहारा वर्गको एक्लोपन बारे जुन कुरा गरेका थिए त्यो तथ्यहीन थियो।

पी. एल. का तर्कहरू मेन्सेविक सोंचाईसित एकदम मिल्दा जुल्दाछन्, उहाँले सोच्नु हुन्छ कि राजाका साथै ने. का. का विरुद्ध संघर्षको नीति अपनाए प्रजातान्त्रिक क्रान्तिमा कम्युनिस्ट पार्टी एक्लो पर्न जान्छ। आश्चर्यको कुरा यो हो कि उहाँले, मेन्सेविकहरूले झैं, सामन्त र दलाल पूँजिपतिको पार्टी ने. का. सितको एकतामा यति धेरै जोड़ दिनु हुन्छ; तर यो कुरा बुझ्नु हुन्न कि जनवादी क्रान्ति का पक्षमा आउने वर्ग र तत्वहरू सित बलियो संयुक्त मोर्चाको नीति अपनाउँदा सम्म पार्टि एक्लो पर्दैन। ने० क. पा. ले लेख्दछ, "हाम्रा साथीहरू प्रायसः यो गलत प्रवृतिको सिकार हुने गर्द छन कि एकै साथ ( राजा र कांग्रेस ) दुवैका विरूद्ध संघर्ष सम्भव छैन। प्रत्यक्ष वा अप्रत्यक्ष रूपले दुइटा मध्ये एउटाको आड र संरक्षणको अभावमा हामी एक्लै अगाडि बढन सग्दैनौं। यस प्रकारको गलत सोंचाई पनि विषयलाई वर्गीय दृष्टीकोणले हेर्न नसक्नु को परिणाम हुन्छ। जस्लाई हामीले अर्थात ने० का. र राजा लाई दुई वा एक अर्काको विरोधी शक्ति सम्झन्छौं ती वास्तवमा एउटै हुन्। उनी हरूका बीचको विरोध कृत्रिम र अस्थाई हो एकता प्रधान र वास्तविक। अब यो कुरा पहिले भन्दा प्रस्टभएर आएको छ। उनहरूका विरूद्ध हामी एक्लै अगाडी बढि रहेका छैनौं, वर्गीय रूपले हामीहरू राष्ट्रिय पूँजिपति वर्ग, युवक विद्यार्थी, किसान, मजदूर र अन्य सबै जनवादी र देश भक्त तत्वहरूका साथ संयुक्त मोर्चा गरेर नै अगाड़ि बढि रहेका छौं। त्यसकारण हाम्रो नीति प्रतिक्रियावादी शक्तिहरू मध्ये कुनै एउटा गुटको आधारमा काम गर्ने होइन, यी सबै क्रान्तिकारी जनवर्ग सित संयुक्त मोर्चा र ठोस जन संघर्षका आधारमा अगाडि बढने हुनु पर्दछ।" ( राजनैतिक दस्तावेजहरू पृ० ५५ )

त्यो मेन्सेविक पत्रले अगाडि लेख्दछ, "पूँजिपति वर्गसित एकताको नीति न अपनाउने हो भने सर्वहारा वर्गको हार र सरकारको जीत निश्चित छ। यो

निरंकुश राजतन्त्रले चाहेको कुरा नै हुने छ" त्यस्को अन्तत, "परिणाम यो हुने छ कि हामीहरू एउटा होइन दुइटा दुश्मनको अगाडि उभिनु पर्ने छ……यो कार्य नीति सरकारको प्रत्यक्ष लाभमा हुनेछ।………" ( लेनिनको उही कृति )

ठीक त्यै किसिमवाट आज पी० एल० हरूले राजा र कांग्रेस दुवैको विरुद्ध संघर्ष गर्ने नीतिले "राजाको हुकुमतलाई बल पुग्न जान्छ" ( कार्यक्रम पृष्ट ७८) भनेर वास्तवमा मेन्सेविक नीति अपनाई राख्नु भएको छ। जेहोस, लेनिन र स्तालिनका माथिका उदाहरणहरूबाट यो कुरामा कुनै शंका रहदैन कि यदि परिस्थिति अनुसार आवश्यक भयो भने प्रतिक्रियावादी पक्षका एक भन्दा वढी वेग्ला वेग्लै गुटहरूका विरुद्ध चाहे तिनीहरू मध्ये कुनै सत्ता भन्दा वाहिर नै किन न रहेका हुन, एकै साथ पनि संघर्षको नीति अपनाउनु पर्दछ। त्यसो गर्नलाई मार्क्सवाद लेनिनवादको मानिएको परम्परा विरुद्ध भन्नु स्वयम गैर मार्क्सवादी धारणा हो।

## – १२ –

राजा र नेपाली कांग्रेस "दुवैको चरित्र मूल रूपमा सामान छ, दुवैले सामन्त वर्ग, नोकरशाही, दलाल पूँजिपति वर्ग, विदेशी पूँजिपति र साम्राज्यवादका प्रतिक्रियावादी स्वार्थहरूको प्रतिनिधित्व गर्दछन," ( राजनैतिक दस्तावेजहरू, पृ. ३३ ) ने. क. पा. को ने. का. प्रतिको यो दृष्टिकोण भन्दा पी. एल. को दृष्टिकोण वेग्लै छ। उहाँहरूको कार्यक्रममा ती दुवैको उल्लेख "नेपालका सामन्तीवर्गका नेता राजा र नेपालको पूँजिवादी वर्गको पार्टी नेपाली कांग्रेस" का रूपमा गरिएको छ। ( पृ. १५ ) यसरी वहाँले स्पष्टतः ने. का. को वर्ग चरित्र राजाको भन्दा प्रगतिशील छ भनेर मान्नु हुन्छ। तर यो विश्लेषणका पक्षमा उहाँले कुनै तथ्य वा तर्क पेस गर्न सक्नु भएको छैन। स्वयं उहाँले पेस गरेका तथ्य हरूले उहांको मान्यतालाई खण्डन गर्छन।

उहाँले भन्नु हुन्छ, "राजा महेन्द्रको यो औद्योगीकरण नीति राष्ट्रिय स्वार्थको निम्ति चाल्नु पर्ने, जस्तो भारतीय एकधिकार पूँजिको प्रभुत्वलाई तोडने र साम्राज्यवादीहरूको घुस पेस लाई रोक्ने नभै उल्टो उनीहरूलाइ नै देशको आर्थिक जीवनमा प्रवेश गराउने रहेर आयको छ।" ( कार्यक्रम पृ. २५ ) राजाले "अमेरिकन फौजी मिसन काठमाण्डौल्याई आधुनिक हतियारको निम्ति सन्धि गरेर भारतीय एकधिकार पूँजिवादलाई ८१ वटा संयुक्त प्रोजेक्ट निर्माण गर्न दिएर चीनवाट निर्माण हुने विभिन्न प्रोजेक्टहरूको निर्माणलाई निलम्वन गरे।" ( उही पृ. २७ ) अर्कातिर ने. का. वारे लेखिएको छ, ने. का. ले "विदेशी एकाधिकार पूँजिलाई वढिमा वढि सुविधा प्रदान गरी उनीहरूलाई छिट्टै नेपालमा प्रवेश गराई

उनीहरूकै शक्तिको आड़मा शक्ति सन्तुलन वनाउने हेतुले जनताको तीव्र विरोध हुँदा हुँदै पनि गण्डक सम्झौता गऱ्यो र भारतीय एकाधिकार पूँजिलाई आमन्त्रण गर्न थाल्यो'' । ( उही पृ० १८ )

राजाको वैदेशिक तथा अर्थिक नीतिलाई संम्पूर्ण रूपले उल्लेख गर्दै भनिएको छ, ''राजा महेन्द्रको आर्थिक तथा वैदेशिक नीति आजका युगमा नेपाली सामन्ती भूमिपतिहरूको स्वार्थको रक्षा गर्ने हेतुले प्रेरित ( उही पृष्ठ २७ ) अर्को तिर 'मूल वाटो'मा उहाले लेख्नु भएको छ ''जहाँ सम्म राजाको आर्थिक तथा वैदेशिक नीति छ, ०७ साल देखि यता एक पछि अर्को गठन भएका विभिन्न सरकारहरूले अपनाउदै आएका नीतिहरूसंग मूलतः भिन्न भिन्न भै मात्रामा केही फरक देखिन्छ ।'' (पृष्ट ४७) साल ०७ साल पछिका ''विभिन्न सरकारहरू'' मध्ये ने: का. को सरकार पनि आउछ । राजाको मूलतः त्यस्को भन्दा ''भिन्न'' न हुनु स्वयं योकुराको प्रमाण हो कि ने. का. को अर्थिक तथा वैदेशिक नीति पनि ''नेपाली सामन्ती भूमिपतिहरूको स्वार्थको रक्षा गर्ने हेतुले प्रेरित'' थियो र छ ।

राजावारे लेखिएको छः राजाले ''अन्तर्राष्ट्रीय भ्रमणगरी नेपाललाई कम्युनिष्ट खतरा वाट बचाउन सक्ने एकमात्र व्यक्तिको रुपमा विश्वपुँजीवादका नेताहरूको विश्वास प्राप्त गर्ने प्रयत्न मा लागे ।'' (कार्यक्रम पृ. १३) अर्कातिर ने. का. वारे लेखिएको छ: ने. का. ''राजाले प्राप्त गरेको भारतीय एकाधिकार पूंजिपतिहरूको समर्थन- लाई आफूप्रति आकर्षित गर्न नेपालमा 'वड्यो कम्युनिष्ट खतरा' भन्ने दुहाई बोल्न थाल्छन ।'' ( उही पृ० १४ )

२००७ सालमा राजा र ने० का० दुवैको भारतीय एकाधिकार सितको संवन्धबारे चर्चा गर्दै लेखिएको छ, ''( ०७ सालको ) क्रान्तिको नेतृत्व ने० का० का तथा राजाका हातमा भएको हुँदा र उनीहरुको घनिष्ट संबन्ध भारतीय एका- धिकार पुंजीवादसंग भएको हुँदा सो काम ( सामन्तबादको समूलनष्टगर्ने काम ) हुन सकेन ।'' ( उही, पृ० २६ )

ने० का० को सामन्ती नीतिवारे लेखिएको छ, ''देशको पूँजिपतिवर्ग ........ देशका मजदूर, किशान तथा मध्यम बर्गीय जनताहरूको स्वार्थको बिपरीत सामन्त संग सम्झौता गर्ने नीतिमा नै अग्रसर छन ।'' सिंहावलोकन पृ० १०७ ) अर्को ठाउंमा ने० का० को नीति ''राष्ट्रीय क्षेत्रमा जनआन्दोलन विरोधी'' भएको कुरा गरिएको छ । ( कार्यक्रम स. व १८ )

माथीका तथ्यहरूले बताउँछन कि वैदेशिक तथा राष्ट्रीय दुवै क्षेत्रमा ने० का० को नीति राजाको भन्दा प्रगतिशील छैन । त्यतिमात्र होईन, आम चुनाव पछिको राजनैतिक स्थितिको चर्चा गर्दै पी. एल. ले ने. का को नीति ''विदेशी पूंजी-

वाद, मुख्य गरेर भारतीय पूँजीवाद परस्त" रहेको कुरा बताउनु भएको छ, ( उही पृ० १८ ) माओले भन्नु भएको छ, जुनवेला जुन विदेशी प्रतिक्रियावादी शक्तिसित बढी अन्तरविरोध हुन्छ, देशभित्र त्यसैका दलालहरूसित बढी विरोध हुन्छ र हुनु पर्दछ। त्यसैले जापान विरोधी युद्धका कालमा उहाँले जापान पक्षीय तत्वहरुको विरोधमा नै बढी जोड लगाउनु भएको थियो, जब कि च्याङ्ग-काई-सेक, जो आङ्लो-अमेरिकन गुटको दलाल थियो, सितको अन्तर विरोधलाई गौण स्तर मा राख्नु भएको थियो। त्यही अवस्थामा स्वयं उहाँ कै व्याख्यानुसार, ने० का० सितको विरोधलाई बढी प्रथमिकता दिनु पर्ने आवश्यकता हुन्छ, किनभने उहाँले नै मान्नु भएको छ; "अन्तर्राष्ट्रिय पूँजिवाद विशेष गरी भारतीय एकाधिकार पूँजि- नेपाली क्रान्तिको सवभन्दा ठूलो विरोधी हुनेछ।" (उही पृ० ६२) अनि "मुख्य- गरेर भारतीय पूँजिवाद परस्त" चरित्र भएको ने० का० प्रति हाम्रो नीति के हुनु पर्दछ ?

यो प्रश्नले उहाँलाई साँच्चै नै अप्ठ्यारो स्थितिमा पारिदिन्छ। तर उहाँले हिम्मत हार्नुहुन्न। उहाँ तुरुन्तै ने० का० अव अन्तर्राष्ट्रिय प्रतिक्रियावादको दलाल रहेको छैन भनेर प्रमाणित गर्न कस्सिनु हुन्छ। उहाँले घोषणा गर्नुहुन्छ, "राजा अन्तर्राष्ट्रीय पुँजीवादको सोल एजेण्टकोरुपमा उत्तरोत्तर देखिन थालेको छ।" ( उहि पृ० ३४ ) त्यसरी उहाँले यो बताउन चाहनु हुन्छ : ने० का० विदेशी पूँजिवादको एजेन्टको रूपमा "उत्तरोत्तर" कम देखिन थालेको छ। यस विषय मा उहाले एउटा आफ्नै विश्लेषण पेस गर्नु भएको छ।

यो कुरा त उहाले भनि सक्नु भएको छ कि पहिले ने. का. को भारती एका- धिकार सितको विशेष सम्बन्ध थियो। संसदको विघटन पछि सम्म पनि स्थिति त्यहि नै थियो। उहाले लेख्नु हुन्छ, "२०१७ साल पौष १गते संसद विघटन गर्दा अंग्रेजी साम्राज्य वादले राजाको कदमको समर्थन गऱ्यो, अमेरिकी साम्राज्य वाद चुपलागि वस्यो र कांग्रेसको समर्थनमा भारतीय पूजिपतिको सरकार देखापऱ्यो"। ( उही पृष्ट १८ ) उहाँको व्याख्या अनुसार त्यस पछि कुनै वेला त्यो स्थितिमा परिवर्तन भयो—ने. का. भारतीय एकाधिकारको समर्थनबाट वंचित भयो र राजा स्वयम ने. का. को स्थान लिन सफल भयो। उहाँले लेख्नु हुन्छ, "पछि भारतीय एकाधिकार पूँजीवाद र अमेरिकी साम्राज्यवादले पंचायती व्यवस्था प्रतिको आफ्नो दृष्टिकोण ) वदले।" ( उहि पृष्ट २७ ) यसरी ने. का. अब भारतीय एकाधिकारको दलाल रहेको छैन भन्ने सिद्ध गर्न उहाले कम दिमागी कसरथ गर्न परेको छैन।

उहाँले जे लेख्नु भएको छ, त्यो कुरा सत्यनै साबित भए पनि त्यसबाट बढि भन्दा वढि जे सिद्ध हुन्छ, त्यो यत्ति होः तत्काल ने. का. को सट्टा राजाले नै भार-

तीय एकाधिकारको समर्थन प्राप्त गरिरहेको छ। तर त्यसबाट ने. का. को विदेशी प्रतिक्रियावादको दलाली गर्ने चरित्रमा परिवर्तन भएको छ भन्ने कुरा सिद्ध हुन्न। उहाँले यस प्रकारका धेरै गल्तीहरू गर्नु भएको कारण यो हो कि उहाँले विषयलाई वर्गीय दृष्टिकोणले कम हेर्ने गर्नु हुन्छ। ने. का. को भारतीय एकाधिकार परस्त चरित्र उस्को निश्चित प्रकारको वर्ग-चरित्रको परिणाम हो। त्यो वर्ग-चरित्रमा नै परिवर्तन नभैकन उस्को भारतीय एकाधिकारसितको सम्बन्धको प्रवृत्तिमा कसरी परिवर्तन हुन जाला ? बर्ग चरित्र भन्ने कुरा यस्तो होईन, जो अकस्मात बदलिने गरोस्।

## – १३ –

माओले भन्नुभएको छ : चीन अर्ध औपनिवेशिक देश भएकाले धेरै साम्राज्यवादी देशहरूका बीचमा प्रतिस्पर्धा चल्ने गर्दछ र उनीहरुका ईसारामा उनीहरुका "पिछलग्गु कुकुरहरू" का बीचमा पनि "कुकुरहरू झगडाहरू" ( Dog fights ) चल्ने गर्दछन। के यो आश्चर्यको कुरा होईन ? माओ भन्नु हुन्छ : "होईन यो आश्चर्यको कुरा होईन, तर ठूला, र साना राम्ररी पालिएका र राम्ररी न पालिएका कुकुरहरूका बीचको ( Between well fed and ill fed Dogs ) विशेष रुपले रमाईलो झगडाको उदाहरण मात्र हो।" (Selected works, vol. I. P. 16 9)

यस्ता दुश्मनहरूका बीचमा चल्ने कुकुर झगड़ालाई पनि क्रान्तिका पक्षमा उपयोग गर्ने कुरामा माओले जोड दिनु भएको छ। त्यसमा कसैको विरोध पनि छैन। तर पी. एल. ले प्रस्तुत गरेका बुँदाहरूबाट नै यो सिद्ध हुन्छ कि राजा र ने. का. का बीचको झगड़ा कुकुर-झगड़ा मात्र हो। पहीले ने. का. लाई भारतीय एकाधिकार पुँजिवादको विशेष समर्थन हुन्दा राजाको नीतिको उल्लेख गर्दै उहाँले लेख्नु हुन्छ : राजाको नीति "भारतीय एकाधिकार पूँजिवाद तथा अन्तर्राष्ट्रीय साम्राज्यवादलाई घुर्की लगाई देशको पूँजिवादी पार्टी ने. का. का नेताहरूलाई प्राप्त भैरहेको समर्थनबाट उनीहरूलाई वञ्चित गरि आफ्ना पक्षमा गराउनु मात्र भएर आएकोछ।" ( कार्यक्रम पृष्ट २७ ) पुन: अर्को अवस्थामा, जुनबेला नेपाली कांग्रेसको सट्टा राजालाई त्यस प्रकारको समर्थन प्राप्त भई रहेको छ भनेर उहाले बताउनु हुन्छ, ने. का. को नीतिको चर्चा गर्दै उहा लेख्नु हुन्छ : ने. का. का नेताहरूले "आज राजाले अमेरिकी अग्रेज सम्राज्यवाद र भारतीय एकाधिकार पूजिवादको जुन समर्थन प्राप्त गरिरहेका छन, त्यस्बाट राजालाई वञ्चित गरी उनीहरूको विश्वास र सहयोगद्वारा नेपालको गद्दी प्राप्त गर्ने आशा गर्न्छन।" ( उहि पृ० २८ ) यसरी, जब कि दुवैको नीति एकै दिशातिर लक्षित छ, कुनै

बेला एउटालाई र कुनै बेला अर्कालाई अन्तराष्ट्रीय पूँजिवादको समर्थन प्राप्त भएका कारणले उनीहरूको चरित्रलाई वेग्ला वेग्लै ठान्ने कुरा कहाँबाट आउछ ?

जव, कुनै पनि प्रकारको विश्लेषण द्वारा ने. का. प्रति सम्झौता परस्तनीति अपनाउनकोलागी उहाँले आधार प्रस्तुत गर्न सक्तु हुन्न, उहाँ 'दुई चराको सिद्धान्त' को आविष्कार गर्न पुग्नु हुन्छ। उहाले भन्नु हुन्छ, "मुख्य आक्रमण सामन्ती अधिनायकवादी व्यवस्था माथी नगरी 'एउटै वाणले दुई भिन्न डालिमा वसेका दुवै चरालाई एकै पल्ट मार्छु, भन्ने नीतिको विरोधमा सैद्धान्तिक संघर्ष चलाउनु पर्छ"। ( कार्य क्रम पृष्ठ ७७ ) स्पष्टत: उहाको यो सैद्धान्तीक संघर्षको घोषणा ती साथीहरूका विरूद्ध लक्षित छ, जस्ले ने. का. र राजा दुवै सितको संघर्षमा जोड दिन्छ जस्ले सामान्तवाद र साम्राज्यवाद दुवैका विरूद्ध संघर्षको नारा दिन्छन्। त्यो भनाइले यस्तो भान हुन्छ कि उहाँले पहिले एउटा चरालाई मारेर मात्र पुन: अर्काको सिकार गर्ने नीति अपनाउनु हुन्छ–शायद पहिले सामन्ती अधिनायकवादी व्यवस्थाको, अनि साम्राज्यवादी व्यवस्थाको तर के यी वेग्ला वेग्लै सम्पन्न हुन सक्ने कुराहरू हुन् ? जस्तो कि स्तालिन र माओले पहिले नै स्पष्ट गरि सक्नु भएको छ, साथ साथै साम्राज्यवाद र उनीहरूका दलालहरू प्रति संघर्ष न चलाइकन सामन्ती अवशेषका विरूद्ध पनि विजय सम्भव छैन। वहाँले जुन असंभव कुराको चर्चा गरि रहनु भएको छ, त्यसको अर्थ एउटै निक्लन्छ–– वहाँले दुइटा मध्ये कुनै पनि चराको सिकार गर्न चाहनु हुन्न।

जसलाई वहाँले "दुई चराको सिद्धान्त" को रूपमा पेश गर्नु भएको छ, त्यो वास्तवमा 'दुई भिन्न डालीको सिद्धान्त' हो। वहाँले राजा र ने० का० लाई दुई भिन्न डालीमा वसेका चराहरू संझनु हुन्छ। जब कि वास्तविकता यो हो-ती दुवै एउटै वर्ग चरित्र भएका चराहरू हुन्।

सामान्य रूपमा हेर्दा राजा र कांग्रेसको बीचमा एउटा अन्तर अवश्य छ: पछिल्लाका साथमा एउटा राजनैतिक पार्टी छ, जब कि पहिलाका साथमा छैन। तर यो अन्तरको अर्थ ती दुवै वेग्ला वेग्लै वर्गचरित्र भएका शक्ति हुन भन्ने होइन। चीनमा पुराना युद्ध सामन्त र च्याङ्काई-सेकका बीचमा यस्तै अन्तर थियो। पहिलाका साथमा कुनै राजनैतिक पार्टी थिएन, जब कि च्याङ काइ सेकका साथमा त्यो थियो। त्यसका वावजूद दुवैले उनै वर्ग चरित्रको प्रतिनिधित्व गर्दै थिए। माओको व्याख्या अनुसार च्याङ् काई सेकको राज्य शहरमा दलाल पूंजिपति वर्ग र गाउँमा जमीन्दार वर्गको राज्य रहेको थियो। जब परिस्थितिका दवावले ठूला दलाल पूंजिपति वर्ग र ठुला जमीन्दार वर्गकोलागि पुरानै तरिकाबाट आफ्नो अस्तित्व कायम राख्न संभव भएन, उनीहरूले शासनका नयाँ तरिकाहरू अपनाए।

यसरी कसैका साथ पार्टी भएकाले र कसैका साथ पार्टी नभएकाले तथा कसैले शासनको एक रूप अपनाएको र अर्कोले अर्को रूप अपनाएकोले समान वर्ग-चरित्र भएका दुई वेग्ला वेग्लै राजनैतिक शक्ति हरुको वर्गआधारलाई वेग्ला वेग्लै ठान्नु गम्भिर गल्ति नै हुन्न जान्छ ।

पि० एल० गुटले अर्को एउटा कुरा बारम्बार उठाइरहेको हुन्छ: राजा सत्तामा छ र ने० का० सत्ता वाहिर । अनि त्यो अन्तरले हाम्रो उनीहरू प्रतिको नीतिमा कुनै अन्तर आउदैन र आउनु पर्दैन ? प्रथमतः यसवारेमा यो साफ हुनु पर्छ कि कुनै एउटा पक्ष सत्तामा र अर्को सत्ता वाहिर भएको कारणले नै उनीहरूको वर्गीय चरित्रलाई नै वेग्ला वेग्लै ठान्ने कुरा आउदैन; दोश्रो समान वर्ग चरित्र भएका राजनैतिक शक्तिहरू वारे पनि उनीहरूको अवस्था र नीतिमा भएको अन्तर अनुसार उनीहरु प्रतिको नीतिमा अन्तर गर्नु पर्ने आवश्यकता हुन्छ । तेश्रो दुश्मन शक्ति-हरुका बीचमा भएका सानाभन्दा साना फूट र विरोधहरूलाई पनि क्रान्तिका पक्षमा कुशल संचालन र उपयोग गर्नु पर्ने आवश्यकता हुन्छ ।

ने० क० पा० ले लेख्दछ, "वर्गीय दृष्टिले सामन्तवाद, विदेशी एकाधिकार र साम्राज्यवाद नै आजका मुख्य दुश्मन हुन, त्यसकारण ती सबै राजनैतिक दल वा शक्तिहरु, जस्ले उनीहरूको वर्ग स्वार्थको प्रतिनिधित्व गर्दछन, हाम्रा मुख्य दुश्मन हुन जान्छन.......वर्तमान कालमा ने० का० र राजा दुवैले उनीहरूका वर्ग स्वार्थ-हरूको प्रतिनिधित्व गर्छन । त्यसकारण वर्गीय दृष्टिकोणले ती दुवै हाम्रा मुख्य दुश्मन हुन जान्छ । उनीहरू मध्ये कसैसितको विरोधलाई गौण ठहराउने प्रयत्न गर्नु विषयवस्तु माथी वर्गीय दृष्टिकोणले विचार नगर्नु नै हुनेछ ।" ( राजनैतिक दस्तावेजहरू" पृ० ३६ )

उनीहरुको वर्गीय स्थिति समान हुनुका बावजूद तात्कालिक "राजनैतिक दृष्टिले" ने. क. पा. ले उनीहरुको अवस्थामा भएको भिन्नता माथी ध्यान दिंदै उनीहरु प्रतिको नीतिमा कतिपय अन्तर गरेको छ । ने. क. पा. ले लेख्दछ, "राजा सत्तामा भएकोले उसितको विरोधले सिधा राजनैतिक संघर्षको रुप लिन्छ, ने. का. सितको विरोधले सैद्धान्तिक तथा राजनैतिक भन्डाफोड र संगठनात्मक प्रहारको" ( उही पृ. ४३ ) ने. क. पा. ले अगाडी लेख्दछ, "ने. का. र राजा को अन्तरविरोधले पुनः शीत युद्धको रुपलिने संभावनालाई एकदम अस्विकार गर्न सकिदैन । त्यस्ता प्रत्येक संभावनाहरुवाट फायदा उठाउने पार्टीको नीति हुनुपर्दछ" ( उही. पृ. ४८ ) अर्को ठाउँमा लेखिएकोछ, ने. का. को "राजा र व्यवस्था सितको.......अन्तरविरोधवाट पार्टीले फायदा नै उठाउनु पर्छ" (उही. पृ. ४८)

पी. एल. ले राजा र ने. का. प्रतिको नीतिमा जुन अन्तर गर्नुभएको छ, तात्कालिक राजनैतिक कार्यनीति ( Tactical ) दृष्टकोणले मात्र होईन । रण-

नैतिक दृष्टिकोणले पनि उहाँले ने. का. प्रति मित्रताको नीति अपनाउनु भएको छ। उहाँले ने. का. लाई वर्गीय दृष्टिकोणले मित्र शक्ति सम्झनु हुन्छ। उहाँले राजा र ने. का. को वीचको झगडालाई समान वर्ग चरित्र भएका प्रतिक्रियावादी शक्तिहरु-का वीचमा चल्ने कुकुर झगडा मात्र नसम्झेर "सामन्ती वर्गका नेता राजा र नेपालको पुँजीवादी जनतान्त्रिक शक्तिको बीचको अन्तर द्वन्द" (कार्यक्रम पृ. ३३) सम्झनु हुन्छ। त्यसरी स्पष्ट छ कि ने. का. प्रतिको उहाँको नीति खालि उ सत्तामा न भएकोले र उसको राजाका साथको अन्तरविरोध वाट फाईदा उठाउने उद्देश्यले मात्र निर्देशित छैन।

## १४ –

पी. एल. गुटले राजा र व्यवस्थाको विरोध गरेर आफूलाई क्रान्तिकारी देखाउन निकै प्रयत्न गरेको पाईन्छ। तर यस प्रकारको घोषित क्रान्तिवाद छद्म पलानवाद हो। देशका अवशरवादी तत्वहरूबाट यो कुरा छिपेको छैन कि नेपालको क्रान्तिको साम्राज्यवाद विरोधी पक्षमा जोड दिनुको अर्थ सिधै भारतीय एकाधिकारको कोपभाजक वन्नु हो। यसका लागि अत्यन्त कष्ट साध्य र सुदीर्घ वाटोका वीचवाट भएर अगाडी जानु पर्ने छ। त्यसका तुलनामा राजा र व्यवस्था सितको संघर्षलाई धेरै सजिलो संपन्न हुन सक्ने कुरा सम्झन्छन। किनभने भारतको थोरै पनि मद्दतले त्यसलाई पुरा गर्न सकिन्छ। ने. का. को राजा विरोधी संघर्षको अर्थ नै भारतको आशिर्वाद प्राप्त गर्नलाई प्रयत्न हो। उनीहरूले सोंच्दछन कि कुनै पनि वेला भारतको मदत मिल्ने वित्तिकै उनीहरूले नेपालमा क्रान्तिगर्न सफल हुन सक्ने छन।

ने. का. को त्यो राजनीतिको असर पी. एल. मा पनि परेको छ। राजा र व्यवस्थाको विरोध गर्न उहाँलाइ ने. का. का संरक्षण प्राप्त हुन्छ, भारत सरकारको मौन आशिर्वाद। उहांका लागि भारतमा सुरक्षित बसेर व्यवस्था विरोध गर्नु धेरैं नै सजिलो कुरा यही नै हुन्छ। उहाँले त्यो गरीराख्नु भएको छ। अर्कातिर ने. का. र भारत सरकारको सिधा विरोधमा जाने नीतिहरूको उहाँले परित्याग गर्नु भएको छ। उहांको यो नीति देशमित्रका ती कथित कम्युनिष्टहरूको भन्दा वेग्लै छैन, जस्ले राजा र व्यवस्थाको मौन समर्थनमा ने. का. र भारतको विरोधमा जोड़ लगाएर आफूलाई क्रान्तिकारी देखाउने प्रयत्न गर्दछन।

गृह युद्धको दौरानमा चीनका एकथर अवशरवादीहरूको आलोचना गर्दै माओ-त्से-तुङ्गले भन्नुभएको छ, "तिमीहरूले तिनीहरूको गद्दी उल्टाउन सक्दैनौ, जसको हातमा गद्दी छ, त्यस कारण तिमीहरूले तिनीहरूको गद्दी उल्टन चाहन्छौ, जसको हातमा गद्दी छैन।" जसका हातमा गद्दी छैन उनीहरुका विरुद्ध मात्र जेहाद

बोलेर आफूलाई सच्चा मार्क्सवादी देखाउने तत्वका रुपमा शंभुराम हुनु हुन्छ। यो नीतिका पछाडिको उहाँको उद्देश्य हो—प्रशासनको मारवाट आफूलाई सुरक्षित राख्न चाहानु। कांग्रेसको विरोध गर्न प्रशासनले कुनै आपत्ति गर्दैन। त्यसकारण उहाँले कुर्ली-कुर्ली भन्नु हुन्छ–ने. का. नं. १ दुश्मन हो। अब उहाँले ती वाम पन्थी कम्युनिष्टका विरुद्ध कोठे-युद्ध सुरु गर्नु भएको छ, जसले सरकारको औजारको रुपमा काम गर्ने कम्युनिष्ट पार्टीको निर्माणको उहाँको योजनालाइ धराशायी वनाई दिएर जसले स्वयं वहाँलाई पार्टी वाहिर हुत्याई दिए। आखिर तिनीहरुसित उहाँको विरोध कुन कुरामा छ? स्तालिनले भन्नु भएकोछ, "यदि ट्राटस्कीको विचार ठीक हो—भने, यो मान्नु पर्ने छ कि किसान वा मजदूर क्रान्ति न चाहने र खालि असमान संधीहरुको अन्तर र चीनका निमित्त भन्सार अनि स्वायत्त शासन ( Customs Autonomy ) को स्थापना गर्न चाहने च्याङ्ग-सोलिन र च्याङ्ग-काई-सेक ठीक थिए भनेर मान्नु पर्ने छ ( Stalin on chinese Revolution P. 100 ) एस. आरलाई नेपालको च्यांसोलिन भन्न सक्नि छ। उहाँले ने क पार्टी का तलका राजनैतिक नाराहरुसित मौलिक प्रकारको विरोध राख्नुहुन्छ।

"जनतालाई पुरा राजनैतिक स्वतन्त्रता प्राप्त हुनु पर्दछ।"

(क) जनता द्वारा चुनिएका प्रतिनिधिहरुलाई संविधान बनाउने अधिकार हुनु पर्दछ।

(ख) मौलिक अधिकार प्राप्त हुनु पर्दछ।....

( ग ) पार्टीमाथी रोक हट्नु पर्दछ, उहाँले वामपन्थी साथीहरूका विरुद्ध जुन हमला बढ़ाई रहनु भएको छ त्यो वास्तवमा माथिका राजनीतिका विरुद्धको हमला हो त्यसप्रकारको हमला द्वारा वास्तवमा उहाँले स्पष्ट र नांगो रूपले वर्तमान व्यवस्थाको प्रतिक्रयावादी राजनीतिक चरित्रको रक्षा गर्ने प्रयत्न गरी रहनु भएको छ। अनि उहाँले तलको नारालाई आजको प्रधान राजनैतिक नाराको रूपमा प्रस्तुत गर्न चाहानु हुन्छ "असमान तथा नेपालको आर्थिक, राजनैतिक स्वतंत्रता, देश र जनताका आधारभूत हितमा आघात पर्ने सन्धि, विदेशी दवाव र हस्तक्षेपको अन्त हुनु पर्दछ।" के यो राजा र व्यवस्था विरोधी संघर्षलाई गौण स्थानमा राख्ने चाल होईन?

उक्त दुवै प्रवृत्ति पलायनवादी प्रवृत्ति हुन र तिनीहरूको विरोध गर्नु पर्दछ।

## – १५ –

पी. एल. ले. लेख्नु भएको छ, "जनवादी कार्यक्रम भन्दा भन्दै पनि उनीहरुको संपूर्ण दृष्टिकोण मजदूर वर्गको नभै संशोधनवादीको छ। त्यसैकारणले गर्दा

पंचायती व्यवस्थाको वर्गीय स्वरूपको संबन्धमा एक शब्द पनि न भनी केवल आलोचना मात्र गर्छन।'' (सिंहावलोकन पृ. ४९) यसरी स्वयं उहाँको भनाईवाट नै यो प्रष्ट हुन्छ कि शत्रु पक्षको आलोचना गर्नु मात्र होईन, त्यसको वर्गीय स्वरूप वारे नै स्पष्ट व्याख्या प्रस्तुत गर्नु निर्णयात्मक महत्त्वको कुरा हो। यस कसौटीमा स्वयं उहाँनै पछाडि परेको पाईन्छ। उहाँका दस्तावेजहरुमा ने. का. को प्रायशः आलोचना गरेको पाईन्छ, तर त्यसको वर्गको चरित्रको सही व्याख्या गरेको पाइदैन। त्यसले गर्दा उहाँले अन्य साथीहरूको आलोचना गर्दा ''जनतामा राजाको षड्यन्त्रलाई ढाक्छोप गरी भ्रम फैलाउने कार्य'' गरेको भन्ने आरोप लगाए झैं स्वयं उहाँले पनि ने. का. वारे त्यही गरिरहनु भएको छ।

ने. का. को वर्ग चरित्रको व्याख्या बारे गतकालमा अन्य साथीहरुले पनि गलत विचार अपनाएको पाईन्छ। उदाहरण का लागि ०१८ सालमा 'नयाँ नेपाल' पत्रिकामा प्रकाशित मोहन विक्रम सिंहको लेखमा भनिएको छ, —''ने. का. का यी सारा सम्झौता परस्त प्रवृत्तिहरूलाई आलोचना गर्दा-गर्दै पनि ने. क. पा. ले ने. का. लाई पूँजिवादी प्रजातान्त्रिक पार्टी मानेर आएको छ।'' त्यो लेखमा अगाडि भनिएको छ, ''दरभङ्गा प्लेनमले देशको वदलिंदो परिस्थितिमा पनि ने. का. प्रतिको उही सोंचाईलाई दोहऱ्याएको थियो र श्री ५ को तानाशाहीको विरुद्धको आन्दोलनमा देशको एउटा मुख्य संगठित प्रजातान्त्रिक शक्तिको रुपमा ने. का. का साथ संभव भए सम्म कुनै पनि स्तरमा औपचारिक वा अनौपचारिक रुपमा एकता कायम गर्ने निर्णय गरेको थियो। जहाँसम्म श्री ५ को तानाशाहीको विरुद्धको आन्दोलनमा देशका प्रजातान्त्रिक तत्वहरू सित औपचारिक वा अनौपचारिक रुपमा संभव भएसंम कुनै पनि स्तरमा एकता कायम गर्ने प्रश्न छ, त्यो विचार आज पनि सही नै छ।'' ने. का. प्रति त्यस प्रकारको धारणा दुईटा मान्यता माथी टिकेको छ; प्रथम ने. का. पूँजिवादी पार्टी हो। दोश्रो, ने का. प्रजातान्त्रिक शक्ति हो। यी दुवै मान्यता मौलिक रूपले गलत सावित भै सकेका छन। अनि उसितको एकताको प्रश्नले अब कुनै अर्थ राख्दैन।

तथ्य यो हो कि ने. का. प्रतिको पहिलेको गलत समझदारी कुनै खास व्यक्ति सित सम्म सिमित नभए र पुरै पार्टीमा व्याप्त थियो। ने. क. पा. ले त्यसको आत्म आलोचना गर्दै लेख्दछ, — ''ने. का. को चरित्रको विश्लेषण गर्ने वारे हाम्रो पार्टीले गतकालमा वढी आत्मगत तरिका अपनाउने गरेको छ। त्यसैले गतकालमा उसको वर्ग चरित्र वारे हाम्रो पार्टीमा स्पष्टता रहेन। लामो समय सम्म हामी उसको वास्तविक वर्ग स्वरूप ठम्याउन असमर्थ भयौं। तर गतकालमा उसको वास्तविक चरित्र धेरै राम्ररी उदांगिएर अगाडि आएको छ। नयाँ अनुभव र जानकारीका आधारमा यो तथ्यमा अब कुनै संदेह बाँकि रहेको छैन कि उ वास्तवमा

सामन्त वर्ग र साम्राज्यवाद, विशेषगरी भारतीय एकाधिकारको प्रतिनिधित्व गर्ने राजनैतिक दल हो !" ( राजनैतिक दस्तावेजहरू, भाग २ पृष्ठ ३४ )

त्यसमा अगाडि लेखिएको छ, "वर्गीय आधारमा जनवादी क्रान्तिको कालमा राष्ट्रीय पूंजीपति वर्गसितको मजदूर वर्गको विरोध गौण हुन्छ। अर्कातिर यो कालमा सामन्त वर्ग, दलाल पूंजीपति वर्ग, विदेशी एकाधिकार तथा साम्राज्यबाद सितको विरोध नै प्राथमिक महत्त्वको कुरा हुन जान्छ। ने० का० को वर्गचरित्र बारे स्पष्ट नहुंदा सम्म सामन्तवर्गका प्रतिनिधिका हैसियतले राजालाई नं० १ दुश्मन र राष्ट्रीय पूंजिपति वर्गका हैसियतले ने० का० लाई क्रान्तिको यो कालमा गौण दुश्मन र दीर्घकालीन दृष्टिकोणले मात्र मुख्य दुश्मन सम्झने धारणाले केही अर्थ राख्दथ्यो। तर ने० का० राष्ट्रीय पूंजीपति वर्गको पार्टी हो भन्ने धारणा नै गलत भएकाले तात्कालिक दृष्टिकोणले ने० का० लाई गौण वर्ग दुश्मन मात्र सम्झने सोंचाई स्वतः गलत हुन जान्छ। अर्को एउटा कारणले पनि पार्टीको ने. का. प्रतिको सोंचाई गलत बन्न गयो। बिसौं पार्टी कांग्रेसको शंशोधनवादी असरवाद-बाट पनि पार्टी बच्न सकेन। त्यसले गर्दा हाम्रो यस्तो सोंचाई बन्न गयो कि जनवादी क्रान्ति भन्दा पहिले एकपल्ट पूंजीवादी संसदीय प्रणाली आउनु पर्छ वा आउनु प्रगतिशील कुरा हुन्छ। द्वितीय महाधिवेशन पछि लामो समयसम्म पार्टी यस्तो गलत विचारको शिकार बनि रह्यो। यही बीचको 'संसदीय कालको नवसंशोधन-वादी परिकल्पनाले ने० का० लाई तात्कालिक दृष्टिले मित्र शक्तिका रूपमा लिन लगाउंछ।" ( उही पृ० ३७–३८ )

०१८ सालको अन्त तिर दरभंगा प्लेनममा केन्द्रीय कमिटीको बहुमतले संस-दीय प्रणालीको पुनस्थापनालाई नै आफ्नो तात्कालिक नारा घोषित गरेको थियो। माथिको पृष्टभूमिमा नै पार्टीले ने० का० प्रति सही दृष्टिकोण अपनाउन सकेको थिएन। तर आज विश्वको स्तरमा र नेपालमा पनि कम्युनिष्ट आन्दोलन संशो-धनवादी प्रभावबाट धेरै मुक्त भैसकेको छ। यो पृष्टभूमिमा ने० का० प्रति पुरानै धारणा अपनाउनुको एकमात्र अर्थ हुन्छ, गत करीब एक दशक भन्दा बढी समयको बीचमा अन्तर्राष्ट्रीय र स्वयं हाम्रै देशको कम्युनिष्ट आन्दोलनमा भएका दीर्घगामी परिवर्तनको उपेक्षा गर्नु। बदलिएको परिस्थिति तथा नयाँ प्राप्त अनुभव र जान-कारीको प्रकाशमा देशका सबै सच्चा बामपन्थी कम्युनिष्टहरूले राजा र ने० का० प्रति सही र यथार्थ दृष्टिकोण अपनाएका छन। ने० क० पार्टीको माथीको विश्ले-षण त्यसको ज्वलन्त उदाहरण हो।

तर पी० एल० आज पनि त्यही ऊभिनु भएको छ, जहाँ पार्टी बीसौं पार्टी कांग्रेसको बेलामा उभिन गएको थियो। तर उक्त कुरा सामान्यतः नै सत्य हो। किनभने प्रथम, त्यो बेला पनि उहाँको कांग्रेस प्रति विशेष झुकाव थियो अन्य

वामपन्थी साथीहरूले ने० का० को वर्ग स्वरूप बारे सही समझदारी अपनाउन नसक्नुको बावजूद पार्टीको स्वतन्त्र भूमिकामा जोड दिन्थे भने उहाँले ने० का० प्रति पिछलग्गुको नीति अपनाउनु हुन्थ्यो। त्यसले गर्दा त्यो वेला पनि ने० का० प्रतिको दृष्टिकोण बारे अन्य वामपन्थी साथीहरू र उहाँका बीचमा मौलिक प्रकारको विरोध थियो। दोश्रो, गत कालमा ने० का० सितको उहाँको साँठ गाँठ झन बढेको छ। यसरी एकातिर अरु वामपन्थी साथीहरूको ने० का० प्रतिको दृष्टिकोण झन कड़ा बन्न गएको छ भने अर्कातिर, उहाँको झन सम्झौता परस्त। त्यसकारण ने० का० को प्रश्नलाई लिएर अन्य वामपन्थी साथीहरू र उहाँको बीचको विरोधले अब झन चौड़ा रूप लिएको छ।

पहिलेको तुलनामा उहाँको नीतिमा एउटा अन्तर अवश्य आएको छ। पहिले उहाँले स्पष्ट र खुला शब्दमा ने. का. सित संयुक्त मोर्चाको कुरा गर्नु हुन्थ्यो। तर उहाँले अब त्यसो गर्न हिम्मत गर्नु हुन्न। उहाँले लेख्नु भएको छ, "विगत समयमा हाम्रो पार्टीले पार्टीहरुका बीच नै संयुक्त मोर्चाको आधार देख्यो। अनुभवले बतायो कि पार्टीको नीति गलत रहेछ। संयुक्त मोर्चा भन्नाले हामीले मुख्य रूपले वर्गहरूका बीचको मोर्चा संझनु पर्दछ" (कार्यक्रम पृ. ७८) उहाँले यसरी यो भ्रम दिने प्रयत्न गर्नु भएको छ कि उहाँ ले ने० का० सितको संयुक्त मोर्चाको नीति छाडि सक्नु भएको छ। तर यो भनाई भित्र कुटीलता लुकेको छ। हालसालै उहाँले भित्र तेश्रो 'रेडिकल' ग्रुपको सिद्धान्त द्वारा पहिले 'गलत' मान्नु भएको "पार्टीहरुका बीचमा नै संयुक्त मोर्चा" नीतिलाई पुन: अपनाउन पुग्नु भएको छ। त्यसले दुईटा कुरा बताउँ छ। प्रथम उहाँले जे भन्नु हुन्छ, त्यसमा न स्थाईत्व हुन्छ, न सच्चाई। दोश्रो, उहाँका लागि कुनै पनि अवस्थामा कांग्रेस भन्दा बाहिर संयुक्त मोर्चाको आधार देख्नु संभव हुन्न। नत्र पार्टीहरुका बीच संयुक्त मोर्चाको आधार नै गलत देखी सके पछि पुन: ने० का० भित्र तेस्रो ग्रुपको सिद्धान्तको प्रतिपादन गरेर त्योसित संयुक्त मोर्चाको आधार देख्ने कुराले के अर्थ लाग्छ।

पार्टीहरुसित संयुक्त मोर्चाको नीति सिद्धान्तत: नै गलत होईन। संयुक्त मोर्चा भन्नाले मुख्य रुपले वर्गहरुका बीचको मोर्चा हो। जुन वर्गहरुसित हामीले संयुक्त मोर्चा कायम गर्न चाहन्छौ, यदि उनीहरुको वर्ग स्वार्थको प्रतिनिधित्व गर्ने राजनैतिक पार्टीहरुको अस्तित्व भए उनीहरुसितको संयुक्त मोर्चाको नीति कसरी गलत हुन सक्छ? यदि आज नेपालमा यस्तो संयुक्त मोर्चा संभव छैन भने त्यस्तो नीति गलत भएर होईन, मित्र वर्गहरुको प्रतिनिधित्व गर्ने कुनै पार्टीको अस्तित्व नभएर। त्यसैले ने. क. पा. ले आफ्नो 'कार्यक्रम संबन्धी राजनैतिक प्रस्ताव' मा भनेको छ, "सर्बहारा वर्गको नेतृत्वमा किसान मजदूरको एकताका आधारमा सबै दुस्मन शक्तिका विरुद्ध मित्र शक्तिहरुको संयुक्त मोर्चा द्वारा नै जनवादी क्रान्ति

संभव हुनेछ। त्यस्ता तत्वहरुको प्रतिनिधित्व गर्ने अन्य कुनै राजनैतिक पार्टीहरुको नेपालमा अभाव छ। त्यो अवस्थामा संयुक्त मोर्चाको प्रधानरुप वर्गहरुसितको संयुक्त मोर्चा हुनेछ," ( राजनैतिक दस्तावेजहरु पृ. ८ ) यसरी जबकि कम्युनिष्ट-पार्टीले पार्टीहरुसित संयुक्तमोर्चा हुन नसक्ने कारण मित्रवर्गको प्रतिनिधित्व गर्ने कुनै राजनैतिक पार्टीको अभावमा देख्दछ भने पी. एल. ले त्यस्तो संयुक्त मोर्चाको नीति नै गलत हुनुमा। जुन वेला ने. क. पा. ले ने. का. लाई पूँजीपति वर्गको पार्टी सम्झन्थ्यो, उसले स्पष्ट र खुला शब्दमा उसित संयुक्त मोर्चाको कुरा गर्दथ्यो।

यदि उहाँले ने. का. लाई अझै पनि नेपालको पुँजीपति वर्गको पार्टी सम्झनु हुन्छ भने, खालि पार्टीहरुका बीच संयुक्त मोर्चाको नीतिलाई गलत मानेका कारण-ले। उहाँले ने. का. सितको संयुक्त मोर्चाको नीति छाडी सक्नु भएको छ भन्न सकिन्न। वर्गको रुपमा हामीले देशीय पुँजीपति वर्ग सित संयुक्त मोर्चाको नीति नै अपनाउँछौं। ने. का. लाई त्यसैको पार्टी माने पछि घुमाई-फिराईकन त्यो सित संयुक्त मोर्चाको नीति अपनाउनु नैं भयो। फरक यत्ति भयो—सिधै नाकलाई छुनुको सट्टा पछाडीवाट हात घुमाएर छोईयो। मूल्य प्रश्न उहाँले पार्टीहरुका बीचको संयुक्त मोर्चाको नीतिलाई गलत मान्नु हुन्छ वा मान्नु हुन्न भन्ने होईन। मूख्य प्रश्न यो हो—उहाँले ने. का. लाई दुश्मन वर्गको पार्टी सम्झनु हुन्छ वा मित्र वर्ग को ?

ने. का. ले दुश्मन वर्गहरुको प्रतिनिधित्व गर्छ भनेर सत्यलाई स्वीकार गर्न उहाँको कांग्रेस परस्त स्वभावले रोक्दछ; मित्र वर्गको पार्टी भन्दा उहाँको कांग्रेस परस्त राजनीतिको जग नै खलवलीने छ। यदि उहाँले ने. का. लाई मित्र वर्गको पार्टी सम्झनु हुन्छ भने उहाँले स्पष्ट शब्दमा त्योसित संयुक्त मोर्चाको कुरा गर्नु पर्दथ्यो। तर अब ने. का. त्यस्तो शक्ति हो भन्ने कुरा राम्ररी नै गलत सावित भैसको छ। उहाँले ने. का. सित खुला शब्दमा संयुक्त मोर्चाको कुरा गर्न सक्नु हुन्न। त्यसवाट पनि उक्त कुरा सिद्ध हुन्छ। त्यसका वावजूद घुमाई फिराईकन उहाँले ने. का सित संयुक्त मोर्चाको जुन कुरा गर्नु हुन्छ, त्यसले उहाँको अपराधी भावनालाई व्यक्त गर्दछ—प्रकट रुपमा त्यो कुरा गर्न नसक्ने, तर अप्रत्यक्ष रुपले पुनः त्यही गर्न खोज्ने।

उहाँले ने. का. लाई मित्र वर्गको राजनैतिक पार्टी सम्झनु हुन्छ। उहाँले ने. का. प्रति ठीक त्यस्तै दृष्टिकोण राख्नु हुन्छ जस्तो कि भारतमा डाँगेहरुले भारतीय कांग्रेसप्रति। उनीहरूले भारतीय कांग्रेसको विश्लेषण यसरी गरेका छन्, "भारतीय राष्ट्रीय कांग्रेस, भारतीय पूँजिपति वर्गको पार्टी, आज शासक पार्टी छ" ( Documents 1964, P-43 ) पी. एल. ले पनि

ने. का. लाई "नेपालको पूँजिपति वर्गको पार्टी नेपाली कांग्रेसको रुपमा उल्लेख गर्नु भएको छ। ( कार्यक्रम पृ० ७६ ) डाँगेहरुले स्वतन्त्र पार्टीको विश्लेषण गर्दै लेखेकाछन्, "स्वतन्त्र पार्टीको एकाधिकार पूँजीपति र सामन्त वर्ग-हरुको खुला पार्टी हो" ( Documents, P. 44 ) भारतीय कांग्रेसको व्याख्या उनीहरुको कांग्रेस परस्त चरित्रको परिणाम हो। आत्मगत रुपमा कांग्रेस र स्वतन्त्र पार्टीका नीति र स्वरुपमा कैयौं भिन्नता हुन सक्छ र छ पनि। तर वस्तु गत रुपमा दुवैको वर्गीय चरित्रमा मूलतः समानता छ। दुवैले एकाधिकार पूँजिपति र सामन्तवर्गहरुको नै प्रतिनिधित्व गर्छन। आफ्नो कांग्रेस परस्त चरित्रको कारणले उनीहरुले ( डांगेहरुले ) भा. कांग्रेसको वर्ग चरित्रको सही विश्लेषण प्रस्तुत गर्न सक्दैनन्। त्यही कारणले पी. एल. ले पनि ने. का. लाई सामन्त र दलाल पूँजिपतिहरुको खुला पार्टी बनाउन सक्नु हुन्न।

ने. का. लाई नेपालको पूँजिपति वर्गको पार्टी बनाउनुको अर्थ त्यसलाई सामान्यतः राष्ट्रीय पूँजिपति वर्गको पार्टी सम्झनु नै हुन्छ। यो वर्ग जनवादी क्रान्तिको कालमा मित्र वर्गको रुपमा रहन्छ, आफ्नो ढुलमुल तथा सामन्तवाद र साम्राज्यवाद परस्त चरित्रका बावजूद। तर यहाँ पनि वहाँले सिधा र स्पष्ट शब्दमा यो कुरालाई स्वीकार गर्नु हुन्न। उहाँ धेरै टाढासम्म भाग्दै जानुहुन्छ। तर आफ्ना पछाडि उहाँले लामो रस्सी छाड्नु भएको छ। त्यसको टुप्पामा समातेर तान्नथालेपछि उहाँ घस्रदै आईपुग्नु हुन्छ र आउनु पर्छ।

ने. का. वारे उहाँले लेख्नु भएको छ, "ने. का. को चरित्रले हाम्रो देशको कमजोर पूँजिपति वर्गको दोहोरो चरित्रलाई स्पष्ट रुपमा प्रतिबिम्बित गर्दछ।" ( कार्यक्रम पृ. ३२ ) यस्तो दोहोरो चरित्र दलाल पूँजिपति वर्गको हुँदैन। पूँजिपति वर्गको "जुन तप्काको स्वार्थ विदेशी पूँजिपति संग गाँसिएको छ।" अर्थात दलाल पूँजिपति वर्ग वारे उहाँले लेख्नु भएको छ, नेपालको पूँजिपति वर्गको यो तप्का क्रान्तिको विरुद्ध हुनेछ" ( कार्यक्रम पृ, ६१ ) यसको चरित्र दोहोरो हुन्छ भनेर कहीं लेखिएको छैन। जनवादी क्रान्तिका "सहायक शक्तिहरु" को उल्लेख गर्दा लेखिएको "राष्ट्रीय पूँजिपति वर्गको दोहोरो चरित्र" शीर्षकले बताउँछ कि दोहोरो चरित्र भएको पूँजिपतिवर्ग भनेको राष्ट्रीय पूँजिपति वर्ग नै हो। जहाँ यसका अन्य विशेषताहरुको उल्लेख न गरीकन पूँजिपति वर्गको उल्लेख गरिन्छ, त्यहाँ यो शब्दले राष्ट्रीय पूँजिपति वर्गलाई नै बताउँछ। यहाँ यो उल्लेखनीय छ कि आफ्ना रचनाहरुमा "पूंजिपतिवर्ग ( बुर्जुआ ) शब्दले माओ-त्से-तुङ्गले राष्ट्रीय पूँजिपति वर्गलाई नै बताउँछु हुन्छ।" (Mao-selected works vol I. P. 70 ) यसरी के स्पष्ट छैन कि उहाँले ने. का. लाई राष्ट्रीय पूँजिपति वर्गको पार्टी संझनु हुन्छ, दलाल पूजिपति वर्गको होइन।

स्टालिनले भन्नुभएको छ, "कमिन्टर्नको प्रस्तावले सामान्यरुपमा ठूला वुर्जुआको होईन, तर पूंजिपति वुर्जुआको भागको कुरागर्छ। फलतः यहाँ सबै प्रकारका ठुला वुर्जुआको होईन। तर गैर दलाल किसिमका राष्ट्रीय वुर्जुआ (पूँजिपति वर्ग) को कुरा गर्छ" ( J Stalin on Chinese Revolution P. 16) यसको ठीक उल्टो वहाँले ने. का. लाई पूँजिपति वर्गको पार्टी वनाउँदा सामान्य रुपले नै चर्चा गर्नु हुन्छ। यो स्पष्ट गर्नु हुँदैन, उहाँले ने० का० लाई त्यसको कुन चाँहि भागको पार्टी वनाउनु भएको हो -दलाल पूँजिपति वर्गको वा राष्ट्रीय पूँजिपति वर्गको? जस्तो कि माथी नै प्रस्ट भै सकेको छ, उहाँले भन्न चाहेको राष्ट्रीय पूजिपतिवर्ग वर्ग नै हो। तै पनि यस्तो दोहोरो अर्थ राख्ने शब्दको प्रयोग गरेर उहाँले वास्तवमा आफ्नै साथीहरुलाई भ्रममा हाल्न खोज्नु भएको छ। जुन साथीहरु ने० का० लाई राष्ट्रीय पूँजिपति वर्गको पार्टी भन्न तयार हुँदैनन्, उनीहरुलाई उहाँले यो भनेर भ्रम दिनु हुन्छ कि ने० का० दलाल पूँजिपति वर्गको पार्टी हो। उहाँले आफ्ना दस्तावेजहरुमा ने० का० को सामन्तवाद र साम्राज्यवाद परस्त चरित्रको प्रायशः चर्चा गर्नु भएको छ। त्यसवाट नै उहाँले ने० का० लाई राष्ट्रीय पूंजिपतिवर्गको पार्टी मान्नु भएको छ भन्ने कुराको खण्डन हुन्छ भनेर उहाँले भ्रम दिने प्रयत्न गर्नु हुन्छ। तर होईन ने० का० को त्यस्तो सम्झौता परस्त नीतिको मूलमा उहाँले राष्ट्रिय पूँजिपति वर्गको दोहोरो चरित्रलाई मान्नु हुन्छ। ने० का० को वर्ग स्वरुप नै प्रतिक्रयावादी हुनुलाई होईन।

यस सन्दर्भमा एउटा भारतीय पत्रिकामा चीन र भारतका कम्युनिष्टहरुवारे जुन तुलनात्मक अध्ययन गरिएको छ, त्यसको चर्चा गर्नु अप्रासंगिक हुने छैन। स्टालिन भारतीय कम्युनिष्टहरुलाई "संझौता परस्त राष्ट्रीय पूंजिपति वर्गका विरुद्ध संघर्ष केन्द्रीत गर्न, त्यसको गद्दारीको भण्डाफोड, मेहनतकश जनतालाई उनीहरुको प्रभाववाट मुक्तगर्न, राष्ट्रीय आन्दोलनमा पूंजिपति वर्गलाई त्यो शक्तिशाली स्थानवाट क्रमशः तल झार्दै लगेर त्यसमा सर्वहारा वर्गको नेतृत्व कायम गर्न भन्नु भएको थियो। .... .... चीनी क्रान्तिको स्टालिनको विश्लेषणले चाईनीज कम्युनिष्टहरुलाई आफ्नो क्रान्ति सफलतापूर्वक सरगर्न मद्दत गऱ्यो, तर भारतमा यी कैल्यै लागु गरीएनन् .... .... " ( A Brief study on the comprader economy in India, by P. K. Roy ) त्यही भारतीय कम्युनिष्टहरुको वाटो पी. एल ले समात्नु भएको छ। यो निश्चित रुपले क्रान्तिलाई अगाडि वढाउने नीति होइन।

— १६ —

ने० का० लाई राष्ट्रीय पूंजिपति वर्गको पार्टी संझनुको परिणाम स्वतः

उसलाई प्रजातांत्रिक शक्ति संझनु हुन्छ। यसलाई उहाँको कुशलता नै संझनु पर्छ कि उहाँले स्पष्ट शब्दमा कहीं पनि त्यो कुरा स्वीकार गर्नु भएको छैन। तर उहाँको मान्यता त्यही छ भन्ने कुरा दस्तावेजहरुबाट सिद्ध हुन्छ। उहाँले प्रजा-परिषद, राष्ट्रिय कांग्रेस तथा संयुक्त प्रजातन्त्र पार्टीलाई "तथाकथित प्रजातांत्रिक पार्टीहरु" ( कार्यक्रम, पृष्ठ ३३ ) को संज्ञा दिनु भएको छ। तर ने० का० लाई कहीं पनि त्यसो भनिएको छैन। गोर्खा परिषदलाई 'अनुदार सामन्ती पार्टी, ( उही, पृ० ३६ ) र प्रजापरिषद, राष्ट्रिय कांग्रेस आदिका नेताहरुको चरित्रलाई "उदारवादी सामन्तको जस्तो" ( उही, पृ० ३२ ) बताउनु भएको छ। 'मूल-बाटो' मा उहाँले "अन्य पार्टीहरुको कार्यक्रम र नीति मौलिक रुपले कांग्रेसको भन्दा भिन्न" (पृ० ३५ ) नभएको कुरा बताउनु भएको छ। के त्यसले पनि यो बताउँदैन कि ने० का० को चरित्र उदारवादी सामन्तको जस्तो हुनु कुनै ठूलो कुरा होइन ? उहाँले एक ठाउँमा राजाले "तथा कथित प्रजातान्त्रिक पार्टीहरु-लाई ने० का० को विरोधमा" उठाएको कुरा गर्नु भएको छ। उहाँले लेख्नु हुन्छः ०७ साल पछि "तथाकथित प्रजातान्त्रिक पार्टीहरुले" सामन्ती वर्गका नेता राजा र नेपालको पूँजिवादी जनतान्त्रिक शक्ति (अर्थात् ने० का०—लेखक) बीचको अन्तरद्वन्दमा हमेशा राजदरवारको आड़मा उभिई आएका छन्। ( उही, पृ० ३३ )

उहाँले अन्य पार्टीहरुलाई "जनतन्त्र विरोधी" ( उही, पृ० ३३ ) वा तथा-कथित प्रजातान्त्रिक बताउनुको कारणमा यी कुराहरुको उल्लेख गरिएको छः उनीहरुले "राजालाई 'राष्ट्रियताको प्रतीक, प्रजातन्त्रको प्रहरी' भनी प्रचार गरे"; "जनताको विधान बनाउने अधिकारलाई पचाउन राजालाई समर्थन गरे।" ( उही, पृ० ३३ ) तर साथ साथै अर्कातिर उहाँले ने० का० ले पनि त्यस्तै कामहरु गरेको कुरा मान्नु भएको छ। उहाँले ने० का० ले "सामन्ती वर्गको समक्ष घुँड़ा टेकेको, ०७ साल पछि राजालाई "राष्ट्रियताको प्रतीक' र 'प्रजातन्त्रका प्रहरी' भनी झुट्टा प्रचार गरेको, जनताको विधान बनाउने अधि-कारको हरणकोलागि राजालाई मदत गरेको" आदि कुराहरुको पनि उल्लेख गर्नु भएको छ। यो उहाँको कांग्रेस प्रतिको पूर्वाग्रहको नै परिणाम हो कि तिनै काम गर्दा उहाँले ने० का० लाई प्रजातान्त्रिक घोषित गर्नु हुन्छ, अरुलाई तथा-कथित प्रजातान्त्रिक।

पहिले पी० एल० ले यो कुरामा जोड़ दिएको पाइन्थ्यो : ने० का० को सुवर्ण-सूर्यप्रसाद गुट नै दक्षिणपन्थी गुट थियो, जब कि बी० पी०— गणेशमान गुट बामपन्थी गुट। उहांको व्याख्या अनुसार यो गुटले राष्ट्रिय पूँजिपति वर्गको दोहोरो चरित्रलाई बताउँथ्यो। त्यसकारण त्यस प्रति दोहरो नीति

अपनाउने आवश्यकता थियो—एकता र संघर्षको। तर यस्तो नीति राष्ट्रिय पूँजिपति वर्गप्रति नै अपनाइन्छ, दलाल पूँजिपति र सामन्त वर्ग प्रति होइन, यद्यपि यो कुरा बेग्लै हो कि उनीहरुका बीचमा चल्ने अन्तर्विरोधहरुबाट पनि फाइदा उठाउने पार्टीको नीति हुनु पर्छ। ने० का० भित्रको यो कथित वामपन्थी गुटले पनि सामन्त र दलाल पूँजिपति वर्ग तथा साम्राज्यवादको नै प्रतिनिधित्व गर्छ।

अब वी० पी०—गणेशमान गुटको प्रतिक्रियावादी चरित्रमा पनि यति धेरै प्वालहरु परि सकेका छन् कि तिनीहरुलाई टाल्नु, कमसेकम सिद्धान्ततः उहाँका लागि संभव रहन गएको छैन। तर ने० का० को एउटा न एउटा पुच्छर न समाती कन उहाँको राजनीति अगाडि बढ्न सक्दैन। त्यसकारण, सबै भन्दा पछिल्लो, अपुष्ट र विश्वस्त सूत्रवाट थाहा भएको समाचार अनुसार उहाँले ने० का० भित्र ३ ग्रुपको नयाँ सिद्धान्तको आविस्कार गर्नु भएको छ रे! आधिकारिक रुपमा थाहा भएपछि त्यसवारे विस्तृत रुपमा विचार गर्नु संभव हुने छ। तै पनि जति थाहा भएको छ त्यस आधारमा त्यसको सरसरी चर्चा गर्नु अनुचित हुने छैन।

उहाँको नवीनतम खोजी अनुसार, ने० का० भित्र अर्को एउटा तेश्रो गुट छ—वामपन्थी र क्रान्तिकारी गुट रे! वहाँले संयुक्त मोर्चाको कुरा गरेको त्यसैसित हो रे! वहाँको ने० का० भित्रको यो ३ गुटको सिद्धान्त पनि भारतीय संशोधनवादीहरुवाट उधारो लिएको थोत्रो सिद्धान्त हो। डाँगेहरुले भारतीय कांग्रेसलाई ३ ग्रुपमा बाँटेका छन्। प्रथम ग्रुप मोरार्जी देशाई र निजलिङ्गप्पाको। यसलाई पूरै प्रतिक्रियावादी मानिन्छ। दोश्रो ग्रुप नेहरु, मेनन, र इंदिराको। यस लाई प्रगतिशील सोचाई राख्ने, तर संझौता परस्त वताइन्छ तेश्रो ग्रुप यङ्ग तुर्क हरुको। यसलाई कांग्रेस भित्रको सवै भन्दा प्रगतिशील अंग वताइन्छ र तिनीहरुसित वलियो एकता बनाउन जोड गरिन्छ। जब स्वयं पी. एल. गुटका कार्यकर्ताहरुको पी. एल. को ने. का. प्रतिको नीतिमा विश्वास रहेन, वहाँले यो नयाँ व्याख्या प्रस्तुत गरेर उनीहरुलाई पुनः भ्रममा हाल्ने चाल चल्नु भएको छ।

भारतीय कम्युनिष्ट पार्टी ( डाँगे गुट ) को कार्यक्रममा भनिएको छ, "कांग्रेस भित्र प्रगतिशील र प्रतिक्रियावादी नीतिहरु निर्माणको क्रममा छन्''''कांग्रेस भित्रका प्रगतिशील शक्तिहरुसित एकता कायम गर्न निरन्तर प्रयत्न गर्नु कम्युनिष्ट पार्टीको कर्तव्य हो।" ( Documents, P. 44 ) जब कांग्रेस सिण्डिकेट र इंडिकेटमा बाँड़ियो उनीहरुले दिपावली मनाए। यही नीतिलाई पी. एल. ले हुवहूं नक्कल गर्नुभएको छ।

ने. का. भित्र सामान्य प्रकारको अन्तर्विरोध भएको कुरालाई अस्वीकार गर्न सकिन्न। तिनीहरुबाट फाइदा पनि उठाउनु पर्छ। तर त्यस्तो फाइदा त के स्वयं पंचायत भित्रका अन्तरविरोधहरुबाट पनि उठाउनु पर्दैन र? यदि उहाँको नीति दुश्मनहरुका बीचमा भएका अन्तर्विरोधहरुबाट नै फाइदा उठाउने हो भने वहाँले त्यतातिरबाट पनि फाइदा उठाउने कुरा किन गर्नु हुन्न? ०२० सालमा पारित नेपाल कम्युनिष्ट पार्टीको तात्कालिक कार्यनीति, जसमा वहाँ स्वयं पनि सहमत हुनुहुन्छ, मा भनिएको छ, "आज देशमा राजनैतिक आन्दोलन उठाउनको निति यस पंचायती व्यवस्थाको विरोधीहरु संग मात्र मिल्नको आवश्यकता न भै अरु तत्वहरु, जो पंचायती व्यवस्था मानेर पनि त्यसबाट राजनैतिक अधिकार प्राप्त गर्ने पक्षमा छन्, संग पनि संयुक्त काम कारवाईको आवश्यकता पर्न आएको छ.... यसको निति हामीले निरन्तर रुपले यस व्यवस्था अन्तर्गत देखा परेको धाँजोलाई फट्याउने प्रयास गर्नु पर्दछ।" (पृष्ठ ८) तर उहाँले आज पंचायती व्यवस्था भित्रनै विद्यमान र संभावित यस्ता प्रवृत्ति हरुको कुनै चर्चा न गरेर खालि कांग्रेस भित्र मात्र प्रगतिशील तत्वको खोजी गर्ने नीतिले उहाँको यस पार्टी प्रतिको पिछलग्गू पनलाई नै दर्शाउँछ, दुश्मनहरुका बीचको अन्तरविरोधबाट फाइदा उठाउने होइन।

जसलाई उहाँले ने. का. भित्रको सच्चा वामपन्थी ग्रुप संझनु हुन्छ, सैद्धान्तिक दृष्टिकोणले त्योसित झन वढी संघर्षको आवश्यकता छ। उनीहरुको भारतीय सोसलिष्ट आन्दोलन र सामाजिक-प्रजातांत्रिक सिद्धान्त सित झन वढी र घनिष्ट संवन्ध छ। विश्वको स्तरमा नै यिनीहरुले सामाजिक साम्राज्यवादी धारा को प्रतिनिधित्व गर्दछन्। पुराना कांग्रेसीहरुको विशेष संवन्ध भारतीय एकाधिकार संग थियो भने यिनीहरु विशेष रुपले अमेरिकन साम्राज्यवादका पिछलग्गू हुन् र हुन्छन्। पुराना कांग्रेसीहरु भन्दा यिनीहरु झन वढी 'वामपन्थी' छन् भने यस अर्थमा कि नेपालको. राष्ट्रियता वारे झन वढ़ी अराष्ट्रिय र प्रतिक्रियावादी दृष्टिकोण राख्दछन्। लोहियाको पाला देखि नै भारतीय सोसलिष्ट नेताहरुले नेपाललाई भारतमा गाभनु पर्छ र भारतको सीमा कैलाश मानसरोवर तथा पूर्ववाहिनी ब्रह्मपुत्र हुन भनेर जोड़ दिंदै आएका छन्। उनीहरु झन वढी मात्रामा चीन विरोधी छन्। यो नेहरुका पाला देखि नै भारतीय सोसलिष्ट नेताहरुको उग्र चीन विरोधी नीतिको उनीहरुमा परेको असरको परिणाम हो।

पी. एल. का यी "वामपन्थी" साथीहरुमा कांग्रेसका पहिला गुटहरुमा भन्दा जुन 'नयाँ' वामपन्थी प्रवृतिहरु देखिन्छन्, तिनले उनीहरुलाई हाम्रा नजिक ल्याउनका सट्टा झन टाढा पुराउँछन्। उनीहरुले केही चर्को स्वरमा गणतन्त्रको कुरा गर्नु का वावजूद इंदिराका यंग तुर्कहरु झैं वी. पी. का अग्रिम प्रचारक दल मात्र हुन्। र उनीहरुको अन्तिम आस्था उनै माथि छ। त्यस माथि कांग्रेस भित्र

वा वाहिर उनीहरुको राजनैतिक चरित्रले कुनै निश्चित र उल्लेखनीय रुप पनि लिइसकेको छैन। त्यो अवस्थामा उनीहरुलाई अनावश्यक रुपले वढी राजनैतिक महत्व दिनु हास्यास्पद कुरा हो।

— १७ —

माओले लेख्नु भएको छ, "जनवादी गणतन्त्रले निश्चित रुपले दुश्मन वर्गहरुको स्वार्थको प्रतिनिधित्व गर्नें छैन। त्यसको उल्टो, यो जमीनदार र दलाल पूँजिपति वर्ग, जापानी साम्राज्यवादका पिछलग्गुहरुको सीधा विरोधमा खड़ा हुने छ र तिनीहरुलाई जनतामा गन्ती गर्नें छैन....दलाल र जमीनदार बर्ग उही भूमिमा वस्छन्, तर उनीहरुलाई राष्ट्रिय स्वार्थको ख्याल छैन, तिनीहरुका स्वार्थहरु वहुमतका स्वार्थसित बाज्छन्" ( Selected Work, Vol I Page 168 )

यो माथिको भनाईले के यो प्रष्ट गर्दैन कि ने० का० प्रतिको हाम्रो नीति उसको "सीधा विरोधमा खड़ा" हुने हुनु पर्छ ? उ भारतीय एकाधिकारको पिछलग्गु हो। उसले दलाल र जमीनदार वर्गको स्वार्थहरुको प्रतिनिधित्व गर्दछ। यस्तो पार्टीसितको विरोधलाई गौण स्तरमा राख्नुको अर्थ स्पष्टत: दुश्मन वर्गहरुका स्वार्थको प्रतिनिधित्व गर्नु हुनेछ। त्यही पी० एल० ले गरिरहनु भएको छ। आफ्नो ने० का० प्रतिको संझौता परस्त नीतिको औचित्यता प्रमाणित गर्नं पी० एल० गुटले दिने सबै भन्दा ठूलो तर्क यो हो उ सत्तामा छैंन। तर माओले, त्यस भन्दा पहिले लेनिन र स्तालिन द्वारा सम्राज्यवादका पिछलग्गु, दलाल पूँजिपति वा जमीनदारहरु सत्ता रुढ न हुंदा संम उनीहरु सितको विरोधलाई गौण स्तरमा राख्न पर्छ भनेर कहीं भनिएको छैन। पी. एल. को तर्कले त जव कम्युनिष्टहरु स्वयं सत्तामा आउने छन्, सवै दुश्मन वर्गहरुसितको विरोधलाई गौण स्तरमा राख्नु पर्नें छ र किसान मजदूर वर्ग सितको विरोधलाई नैं प्राथमिकता दिनु पर्नें छ।

उनीहरूले यो भन्न सक्दछन्, माओले त्यो कुरा जनवादी गणतन्त्रको स्थापना भए पछिका लागि मात्र गर्नु भएको हो र त्यो 'फौरी' काम होइन। होइन, यो त तत्कालको पनि आवश्यकता हो। चीनिया कम्युनिष्ट पार्टीको केन्द्रीय कमिटीले लेख्दछ, "एशिया, अफ्रिका र ल्याटिन अमिरिका का उत्पीड़ित राष्ट्रहरू र उत्पोड़ित जनताहरूका अगाड़ि साम्राज्यवाद र त्यसका दलालहरुका विरुद्ध लड्ने फौरी काम मौजूद छ।" (सोभियतसंघको कम्युनिस्ट पार्टीको ३० मार्च १९६२ को पत्रको जवाफमा चीनी कम्युनिष्ट पार्टीको केन्द्रीय कमिटीको पत्र ) ने. का. साम्राज्यवादको दलालहरूको श्रेणीमा आउँछ। त्यस कारण उ सत्तामा न भएकाले उसितको विरोधलाई गौण स्तरमा राख्न मिल्दैन। त्यो पत्रमा अगाडि भनिएको छ, "सर्वहारा वर्गको पार्टीका लागि यो आवश्यक छ कि त्यसले देशभक्त राष्ट्रिय पूंजिपतिहरुको प्रगतिशील भूमिकाको पूर्ण मूल्यांकन गरोस तथा

उनीहरुसित एकता वलियो पारोस् ।" देशभक्त राष्ट्रिय पूंजिपतिहरू प्रति अपनाउनु पर्ने नीति वहाँले तिनीहरू प्रति अपनाइरहनु भएको छ, जो प्रथम, दलाल पूँजिपतिहरू हुन र जसको वढी साँठ गाँठ विदेशी पूँजिसंग हुन्छ; जसले "जनविरोधी, कम्युनिष्ट-विरोधी र क्रान्ति विरोधी नीति" अपनाइरहेका छन र जसको "दृढता-पूर्वक विरोध" गर्नु पर्ने कुरामा नै उक्त पत्रमा जोड़ दिइएको छ ।

त्यो पत्रमा यो पनि भनिएको छ, "यी क्षेत्रहरू ( एशिया, अफ्रिका र ल्याटिन अमेरिका ) मा जनताको अत्यन्त व्यापक तप्काले साम्राज्यवादको गुलामीलाई अस्वीकार गरिदिएका छन् । त्यसमा मजदूर, किसान, बुद्धिजीवी र निम्न पूँजिपति मात्र होइनन्, देशभक्त, राष्ट्रिय पूँजिपति तथा केही देशभक्त राजा-रजवाड़ा र कुलीन पनि सामेल छन् ।" उहाँको देशभक्त राष्ट्रिय पूँजिपतिसित एकता कायम गर्ने भनिएको वेलामा देशद्रोही, साम्राज्यवादी दलाल पूँजिपतिसित एकता कायम गर्ने नीति अनुसार त देशभक्त राजा-रजवाड़ा र कुलीनको समर्थन र साम्राज्यवादसित साँठगाँठ गरिरहेका प्रतिक्रियावादी राजा महाराजाहरुको समर्थनमा पनि कुनै अन्तर रहन्न ।

यो कुरा मात्र होइन । देशको कम्युनिष्ट आन्दोलनमा आज उक्त दुवै प्रकारका भड़कावहरू देखा परिरहेका छन् । एक थर जस्तै कि एस. आर, ले कांग्रेस र भारतको विरोधको नाममा राजालाई राष्ट्रवादी बताएर उसलाई सिंहानुक बनाउने कुरा गर्छन । अर्को थरले, अर्थात पी. एल. ले राजा र व्यवस्थाको विरोधको नाममा ने. का. लाई राष्ट्रिय पूंजिपति वर्गको पार्टी बनाएर बी. पी. लाई सन्यात सेन र सुकार्णोसित दाज्छन् । तर दुवै थरलाई थाहा छ कि उनीहरुको व्याख्या गलत छ । राजा वा कांग्रेस दुवै देश भक्त र साम्राज्यवाद वा सामन्तवाद विरोधी तत्व होइनन् । त्यो अपराधी भावनाका कारणले दुवै थरले खुला शब्दमा त्यो कुरा स्वीकार गर्दैनन्, जे उनीहरुले गरिरहेका छन् । यिनीहरु मध्ये कुनैमा पनि न त्यो नैतिक साहस छ, न राजनैतिक इमान्दारी ।

चीनको पार्टीको पत्रमा भनिएको, "जसै जसै भित्री सामाजिक अन्तर्विरोध र र अन्तर्राष्ट्रिय वर्ग संघर्ष तीव्र हुदै जानेछ त्यसै त्यसै केही नव स्वाधीन देशहरुमा पूँजिपति र खास गरेर ठूला पूँजिपति अधिकाधिक रुपले साम्राज्यवादको काखमा जाने तथा जनविरोधी, कम्युनिष्ट विरोधी र क्रान्ति विरोधी नीति अपनाउने वन्दै जान्छन् । सर्वहारा वर्गको पार्टीकोलागि यो आवश्यक छ कि त्यसले यी प्रतिक्रया-वादी नीतिहरुको दृढ़तापूर्वक विरोध गरोस ।"

नेपालको अर्थतन्त्र वृटिश – भारतको काल देखिनै भारत माथि आश्रित हुँदै आएको छ । यहाँ शुरुमा जुन उद्योग धन्दाहरुको विकास भयो, मुख्यतः भारतीय

पूँजिको बलमा । यहाँका घरेलू उद्योग-धन्दाहरु बृटिश इंडियाका औपनिवेशिक नीतिले गर्दा नष्ट भए । भारतीय एकाधिकार पूँजिको प्रभाव र नियन्त्रणले राष्ट्रिय उद्योग-धन्दाको विकास हुन पाएन । फलतः यहाँ प्रारम्भमा जुन पूँजिपति वर्गले गऱ्यो, त्यसको चरित्र प्रधानतः दलाल नै रह्यो । देशमा राष्ट्रिय उद्योग व्यापारी को विकास अवश्य प्रारम्भ भएको छ । तर उनीहरु एक दम कमजोर र प्रारम्भिक अवस्थामा छन् । यहाँ दलाल पूँजिपति वर्गको नै, यद्यपि त्यो मध्यम वर्गीय अवस्थामा छ, प्रमुख स्थान छ ।

सामान्यतः कुनै देशमा मुख्यतः ठूला पूँजिपतिहरुको नै साम्राज्यवाद सित साँठ गाँठ हुन्छ । नेपालमा यस्तो पूँजिपति वर्ग अझै अस्तित्वमा नै आई सकेको छैन । तर नेपालको छेउँमा भारत जस्तो देश छ, जहाँ एकाधिकार पूँजिवादको धेर-थोर विकास भै सकेको छ । नेपालको पिछडिएको तथा भू-परिवेष्टित अवस्थाले गर्दा यहाँको राजनीति सीधै र प्रत्यक्ष रुपले भारतीय एकाधिकार द्वारा प्रभावित हुन्छ ।

माथिका सबै कुराहरु--प्रथम, देशमा देशभक्त राष्ट्रिय पूँजिपति वर्गको कमजोर र अविकसित अवस्था; दोस्रो, दलाल पूँजिपति वर्गको नै देशको उद्योग-व्यापारमा प्रमुख स्थान र तेस्रो, भारतका ठूला पूँजिपतिहरुको प्रत्यक्ष असर–ले ने. का. को राजनैतिक चरित्रलाई निर्धारित गरेका छन् । ने. का. को जन्म नै वास्तवमा भारतीय एकाधिकारको प्रेरणा र पथ प्रदर्शनमा अंग्रेज भारतवाट गए पछि वदलिएको परिस्थितिमा नेपालमा त्यसका ( भारतीय एकाधिकारका ) आर्थिक तथा राजनैतिक स्वार्थहरुको पक्षमा काम गर्नका लागि भयो, त्यसैले उनीहरुको चरित्र प्रारम्भ देखिनै यति धेरै अराष्ट्रिय, जनविरोधी, क्रान्ति-विरोधी तथा उग्र कम्युनिष्ट-विरोधी रहँदै आएको छ । यो तथ्यलाई स्वयं पी. एल. ले पनि अस्वीकार गर्न सक्नु हुन्न । उहाँले लेख्नु हुन्छ, "नेपाली कांग्रेस ··· ···· का नेताहरुको जीवन नै कम्युनिष्ट-विरोधी अभियानवाट शुरु भएको छ । आजको स्थितिमा पनि यस पार्टीका नेताहरु कम्युनिष्ट पार्टीलाई नै आफ्नो मुख्य दुश्मन भन्दछन् । नेपालमा 'कम्युनिष्ट-हाऊ' को प्रचार सवै भन्दा वढी यसै पार्टीका तर्फबाट रहेको छ ।" ( कार्यक्रम, पृष्ठ १८ )

यस्तो अवस्थामा जुन कुरा आपेक्षित थियो र छ, त्यो यो हो–उस प्रति दृढतापूर्वक विरोधको नीति । तर आश्चर्यको कुरा हो कि यस्तो अवस्थामा पनि उहाँले त्यसलाई राष्ट्रिय पूजिपति वर्गको पार्टी बताउनु हुन्छ र त्यो सित एकताको कुरा गर्नु हुन्छ । जुनवेला चीनमा कोमिन ताङ्गसित एकताको कुरा गरिएको थियो, त्यो वेला उसका विषयमा स्पष्ट शब्दमा भनिएको थियो; "कोमिन ताङ्ग साम्राज्यवाद-विरोधी पार्टी हो, जस्ले साम्राज्यवादीहरु र चीनमा त्यसका एजेण्टहरुका

विरुद्ध क्रान्तिकारी संघर्ष गरिरहेको छ।" स्टालिनले यो पनि भन्नुभएको छ, "यदि कोमिन ताङ्ग साम्राज्यवादी, निम्न पूँजिवादी पार्टी भएको भए चीनिया कम्युनिष्टहरुले त्यो सित मोर्चा बनाउने थिएनन्," ( Stalin on Chinese revolution ) जब पछि कोमिन ताङ्ग पार्टीले साम्राज्यवादी नीति अपनायो, त्यहाँका कम्युनिष्टहरुले उसित आफ्नो संबन्ध तोडे। च्यांकाइ शेक सित पनि उनीहरुले एकताको नीति त्यो वेला नै अपनाए, जब त्यसले स्पष्ट रुपमा जापानी हमलाका विरुद्ध युद्धको नीति अपनाउन स्वीकार गर्‍यो। तर तथाकथित नेपाल कम्युनिष्टपार्टीका स्वघोषित महामन्त्रीले त्यो वेला ने. का. सित एकता को कुरा गरिरहनु भए को छ, जब कि सीमित अर्थमा पनि त्यसको भूमिका साम्राज्यवाद विरोधी छ भनेर आफ्ना दस्तावेजहरुमा भन्न सकिरहनु भएको छैन। रुसमा जब त्यहाँको उदारवादी पूँजिपति वर्गले प्रतिक्रान्तिका विरुद्ध लड़ने भन्दा क्रान्तिको विरुद्ध लडने नीति अपनाएका थिए, स्टालिनले उनीहरुसित एकताको प्रश्नवारे स्पष्ट रुपमा भन्नु भएको थियो, "के उदारवादी पूँजिपति वर्ग वर्तमान क्रान्ति ( पूँजिवादी क्रान्ति ) मा कमसेकम सहयोगी संम हुन सक्छ ?"

"वोल्शेविकहरुको भनाई छ कि यो हुन सक्दैन। साच्चै नै, फ्रेंच क्रान्तिमा उदारवादी पूँजिपति बर्गले क्रान्तिकारी भूमिका खेलेको थियो। तर त्यसको कारण यो थियो कि त्यहाँ वर्गसंघर्ष यति तीव्र भइसकेको थिएन। सर्वहारा वर्ग कम वर्गसचेत थियो र उदारवादीहरुको औजारको भूमिकावाट नै संतुष्ट थियो, जब कि हाम्रो देशमा सर्वहारा वर्ग धेरै वर्ग सचेत भइसकेको छ र उदारवादीहरुको औजार मात्र भएर रहन सक्दैन। जहाँ सर्वहारा वर्ग सचेत भएर लड़छ, उदारवादी पूँजिपति बर्ग क्रान्तिकारी रहन जान्न।" ( J V. Stalin, Works, Vol. II Moscow-1953 Page 4) यसरी रुसको क्रान्तिमा मेन्सेविकहरुसित वोल्शेविकहरुको मतभेद पूँजिवादी प्रजातांत्रिक क्रान्तिमा उदारवादी पूँजिपति वर्गसित एकताको प्रश्न वारे पनि थियो। माथिको भनाईले यो बताउँछ कि कुनै देशमा पूँजिपति वर्गसितको एकता जुन सुकै परिस्थितिमा पनि लागू हुने कुरा होइन र त्यो अवस्था विशेष माथि निर्भर रहने कुरा हो। तर पी. एल. ले जुन सुकै अवस्था र ने. का. को जुनसुकै प्रकारको राजनैतिक चरित्र ( उ साम्राज्यवादको दलाल, कम्युनिष्ट विरोधी आदि ) का बावजूद पनि उसित एकताको कुरा गर्नुहुन्छ। जस्तो कि स्टालिनले रूसका उदारवादी पूँजिपति वर्गका नेता केडेटहरु बारे भने झैं नेपालमा ने. का. जनवादी क्रांतिको "जागरुक" दुश्मन हो। त्यो अवस्थामा ने. का. सितको एकता एकदम प्रतिक्रियावादी कुरा हुनेछ।

– १८ –

यहाँ यो उल्लेखनीय छ कि ने॰ का॰ सितको एकताको कुरा पनि पी॰ एल॰

ले स्पष्ट शब्दमा स्वीकार गर्नु भएको छैन। तैपनि तथ्य यो हो कि उहाँले त्यसलाई मित्र शक्ति संझनु हुन्छ। त्यो सित एकताको चर्चा गरेर स्वयं आफ्नै 'गुटमित्रका साथी हरुको असन्तोषको पात्र नवन्न जहाँ पनि ने० का० सित एकताको चर्चाको कुरा-आउँछ, उहाँले खालि "पूँजिपति वर्ग" शब्दको प्रयोग गर्नु भएको छ। तर प्रशंगहरुबाट यो वुझ्न अप्ठचारो पर्दैन कि त्यो ने० का० वारे भनिएको हो। तलको भनाईवाट यो कुरा प्रस्ट हुन्छ, "पूँजिपति वर्ग यो जन असन्तोषलाई देखाई राजासित सम्झौता गरी केही सहुलियत सम्म लिने कुरामा सिमित रही यस व्यवस्थामा सुधारका कुरा गर्दै छ।" ( कार्यक्रम पृ० ७४ ) यहाँ पूँजिपति वर्गको चरित्रवारे सामान्य रुपमा कुरा न गरेर ने० का० को खास राजनैतिक नीतिको नै चर्चा गरिएको छ। अर्को ठाउँमा लेखिएको छ, "ने० का० पूँजिवादी पार्टी हो ........ नेपालमा कम्युनिष्ट—हाउको प्रचार सवैभन्दा वढी यसै पार्टीका नेताहरुका तर्फवाट भै रहेको छ।" ( कार्य क्रम पृ० २८ ) के यी कुराहरुले स्पष्ट गर्दैनन कि जहाँ खास राजनैतिक नीतिको अर्थमा, "पूँजिपति वर्ग" शब्दको प्रयोग गरिएको छ, त्यो नें० का० बारे नै भनिएको हो ?

उहाँले लेख्नु हुन्छः अन्य वर्गहरुका साथै राष्ट्रीय पूँजिपतिलाई "आन्दोलनका पक्षमा तान्नको लागि मित्र शक्तिहरुका रुपमा ब्यवहार गरी मित्रहरुका रुपमा नै उनीहरुको सामन्त परस्त नीतिको आलोचना अर्थात एकता र संघर्षको नीति अनुशरण गर्ने कार्य प्रत्येक कम्युनिष्टको ब्यवहारमा लागु गर्नु पर्दछ। आजको स्थितिमा एकताको सवाललाई पन्छाई एकता विरोधी खाईलाई चौड़ाउने खालको कुनै पनि उत्तेजनात्मक काम कारवाही गर्नाले आन्दोलनलाई नै नोक्शान हुन जान्छ। अर्थात् राजाको हुकुमतलाई बल पुग्न जान्छ। सवैं कम्युनिष्टहरुको ध्यान यसतर्फ जानु आवश्यक छ" ( उही पृ० ७७-७८ ) त्यसरी उहाँले, प्रथम, ने० का० लाई "मित्रशक्ति" सम्झनु हुन्छ, दोश्रो उहाँले उनीहरुको जति आलोचना गर्नु हुन्छ "मित्र का रुपमा नै" तेश्रो ने० का० विरोधी "कुनैपनि उत्तेजनात्मक काम कारवाही माथी रोक लगाउनु हुन्छ।" त्यति मात्र होईन, उहाँले ने० का० विरोधी "अपर्झट सोचाई, अपर्झट उत्तेजनात्मक कारवाई तथा अचेतन क्रिया कलाप" सम्मलाई रोक्न भन्नु हुन्छ। चौथो, ने० का० विरोधी काम कारवाईलाई प्रजातन्त्र विरोधी र राजावादी वताउनु हुन्छ।

वहाँको ने० का० प्रतिको यो अत्यधिक मैत्रीपूर्ण रुखको परिणाम हो कि वहाँले ती सवैलाई आफ्ना दुश्मन सम्झनु हुन्छ, जस्ले ने० का० लाई आफ्नो दुश्मन सम्झन्छ, को सच्चा कम्युनिस्ट वा क्रान्तिकारी हो वा होइन ? त्यो छुट्याउने वहाँको कसौटी यही छ-त्यस्ले ने० का० लाई दुश्मन सम्झन्छ वा मित्र ? जस्ले ने० का० लाई राजालाई झैं दुश्मन क्याम्पमा लगेर राख्दछ, त्यस

लाई आफ्नो दुश्मन घोषित गर्नु हुन्छ। यो हद दर्जाको अधपतन र नाङ्गो प्रकारको अवसरवाद हो।

पी. एल. गुटले ने. का. को यस्का लागि बारम्बार आलोचना गरेको पाइन्छ। ( निश्चय नै मित्रको रुपमा ) ने. का. ले ''प्रजातन्त्र राष्ट्रीय सवाललाई उठाई व्यापक जनवादी मोर्चामा विश्वास गरी जनताको क्रान्तिकारी शक्तिमा भरपरी अधिनायकत्वका विरुद्ध संघर्ष गर्ने नीति'' लिएन। ( उही पृष्ठ २१ ) आम निर्वाचन पछि ''देशका सच्चा प्रजातान्त्रिक शक्तिहरुलाई एक जुट गरि''''सामन्ती वर्ग संगको अन्तर विरोधहरुलाई तेज गरि'''। काम नगरेकोमा त्यस्को आलोचना गर्नु भएको छ। यी आलोचनाहरुले वहाँको यो विश्वासलाई बताउँछन् कि ने. का. लाई प्रजातन्त्र र राष्ट्रिय सवाललाई उठाउने, व्यापक जनवादी मोर्चा माथि विश्वास गर्ने, जनताको क्रान्तिकारो शक्तिमा भरपर्ने तथा सच्चा प्रजातान्त्रिक शक्तिहरुलाई एकजुट गर्ने अर्थात् नेतृत्व गर्ने शक्ति हो।'' वहाँ यो कुरामा सहमत हुनु हुन्न कि उ आफ्नो वर्ग स्वरुपले गर्दा खेरिनै ती कुराको पक्षमा आउन सक्दैन, नेतृत्व गर्ने कुरा परै छ।

आजको युगमा पूजिपतिवर्गले किन पूजिवादी क्रांतिको नेतृत्व गर्न सग्दैन ? त्यस वारे वहाँले लेख्नु भएको छ। ''हाम्रो सामाजिक स्थितिमा रहन गएको नेपालको पूजिपति वर्गको कमजोर स्थितिले गर्दा सामन्तवाद विरोधी पूजिवादी आन्दोलनमा पजिपति वर्गको अग्रिम भूमिका खेल्ने क्षमता राख्दैन।'' ( कार्यक्रम पृ० ३४ ) यहाँ दुइटा कुरा बताइएको छ। प्रथम, पूजिपति वर्गले पूजिवादी क्रान्ति गर्न नसक्नुको कारण ''हाम्रो सामाजिक स्थितिमा रहन गएको नेपालको पूजिपति वर्गको कमजोर स्थितिलाई मानिन्छ।'' यस्ले दोस्रो वहाँको यो आशा-लाई बताउँछ कि यो अवस्थामा सुधार भएपछि पूजिपति वर्गले पुन: त्यो क्रान्तिको नेतृत्व गर्न सक्ने छ। उहाँले यो वास्तविकतालाइ बुझ्न सक्नु हुन्न कि आजको विश्वको परिस्थितिमा आएका परिवर्तनहरुले गर्दा नै उसका लागि त्यस प्रकारको नेतृत्व गर्नु संभव छैन।

वहाँले लेख्नु भएको छ, ' ने. का. को चरित्रले हाम्रो देशको पूजिपति वर्गको दोहरो चरित्रलाई प्रतिबिम्बित गर्दछ'' ( उही पृ. ३२ ) यस्ले वहाँको यो विश्वासलाई बताउँछ कि यो वर्गको आधार मजबूत हुदै गए पछि उ जनवादी क्रान्तिको पक्षमा मिल्न आउने छ। उहाँले राष्ट्रीय पूँजिपति वर्गवारे लेख्नु भएको छ, राष्ट्रिय जनवादी आन्दोलन जति मात्रामा बढेर जानेछ, यो अङ्ग ( अर्थात राष्ट्रिय पूँजिपति वर्ग ) अन्य पूँजिवादी तत्वहरूको अङ्गवाट अलग भै राष्ट्रिय आन्दोलनलाई साथ दिन आई सामन्ती व्यवस्था र विदेशी पूँजिको विरुद्ध उभिनेछ। यस्तो राष्ट्रीय पूँजिपतिवर्ग कहलाउनेछ।'' ( उही पृ० ६९ ) उहाँले

ने० का० लाई राष्ट्रीय पूँजिपति वर्गको पार्टी सम्झनु हुन्छ। त्यस कारण यो कुरा उहाँले ने० का० बारे नै भन्नु भएको हो भनेर बुझ्न गाह्रो पर्दैन।

ने० का० संबन्धी उहाँको यो धारणा मौलिक रुपले नै गलत छ। पूँजिपति वर्ग अर्थात राष्ट्रीय पूंजिपतिवर्ग प्रतिको हाम्रो नीति अवश्य पनि "एकता र संघर्ष"को हुनु पर्छ। तर ने० का० को चरित्रले दलाल पूँजिपति र सामन्त वर्गको प्रतिक्रियावादी चरित्रलाई प्रतिविम्बित गर्छ। हाम्रो देशको कमजोर पूँजिपतिवर्गको दोहोरो चरित्रलाई होईन। त्यसकारण हामीले उसप्रति एकता र संघर्षको होईन, उसको "सिधा विरोधमा खड़ा" हुने नीति अपनाउनु पर्छ। ने० क० पा० ले उसको भावी चरित्र वारे स्पष्ट गर्दै भनेको छ, "नेपालमा राष्ट्रीय पूँजिपति वर्ग अझै शीशु अवस्थामा रहेको ले सामन्तवाद र साम्राज्यवादका विरुद्ध उनीहरुको वर्ग स्वार्थले स्पष्ट रुप नलिई सकेकोले नै उसले राष्ट्रीय पूँजिपति वर्गको पक्ष लिन्छ भन्ने भ्रम दिन सकेको छ। हाम्रा देशका राष्ट्रीय उद्योग व्यापारीमा आफ्नो अविकसित अवस्थाका कारणले भारतीय एकाधिकारका मातहतमा नै विकाश गर्ने आशा राख्दछन। त्यसैले गर्दा पनि ने० का० काफी हदसम्म उनीहरुको समर्थन प्राप्त गर्न सफल भएको छ। तर जति जति नेपालका राष्ट्रीय पूजिवाद तथा सामन्तवाद र विदेशी एकाधिकारसितको विरोधले विकास गर्दै जानेछ, देशका जनवादी र राष्ट्रीय आन्दोलनको शक्ति वढ्दै जाने छ। ने. का. झन-झन वढी र स्पष्ट रुपले सामन्तवाद र विदेशी एकाधिकारका पक्षमा मिल्दै जानेछ।" (राजनैतिक दस्तावेजहरु पृ. ३४) उहाँको ने. का. राष्ट्रीय जनवादी आन्दोलन वढ्नुका साथै सामन्ती व्यबस्था र विदेशी पूजिपतिको प्रभुत्व-को विरुद्धमा उभिन जानेछ भन्ने विचार एकदम गलत विश्लेषण माथि आधारित छ।

पी. एल. गुटको कार्यक्रममा लेखिएको छ, "राणाशाही कालमा राजाको हातमा कुनै अधिकार नहुँदा राजा आन्दोलनमा सरीक भएका थिए। तर क्रान्ति पछि राजाले आफ्नो वर्गाधार तिनै सामन्ती वर्गमा देखी उनैलाई आफ्ना वरिपरि भेला गरी प्रजातन्त्र विरोधी रुख लिदा देखिन गएको उनको प्रतिक्रान्तिकारी रुखले राजालाई आजको आन्दोलनको प्रमुख शत्रुको प्रतिनिधिको रुपमा देखाएको थियो। त्यो कुरा त्यसवेलाको कम्युनिष्ट पार्टीको नेतृत्वले देख्न नसक्नु नै सबभन्दा ठूलो राजनैतिक भूल थियो।" (उही पृ० १९)

आज पुन: त्यस्तै एउटा "सबै भन्दा ठूलो राजनैतिक भूल" पी. एल. ले दोहराई रहनु भएको छ। "राजाको हातमा कुनै अधिकार नहुँदा राजा आन्दोलनमा सरीक" भए झैं आज ने. का. पनि सत्ताका लागी नै आन्दोलनमा सरीक भएको छ। जसरी राजाको राणा-विरोधी संघर्षको मूलमा कुनै भिन्न वर्गीय स्वार्थले

भन्दा सत्ताको लोभले नै काम गरेको थियो, त्यस्तै ने. का. को राजा विरोधी संघर्षको मूलमा भिन्न वर्गीय या राजनैतिक चरित्रले भन्दा सत्ताको लोभले नै काम गरेको छ, सामान्य रुपले प्रजातन्त्र विरोधी र विशेषरूपले राष्ट्रियता विरोधी रूख लिंदा देखिन गएको ने. का. को "प्रतिक्रान्तिकारी रूपले" के उ आजको आन्दोलनको एउटा "प्रमुख शत्रु वर्गको प्रतिनिधि" देखिन गएको छैन ? यो कुरा-लाई बुझ्न सकिएन भने पुनः अर्को गम्भीर प्रकारको राजनैतिक भुल हुनेछ ।

– १९ –

पी. एल. ले ने. क. पा. को 'प्रथम घोषणा पत्र, बारे लेख्नु भएको छ, "यो कुरा ठोकुवा साथ भन्न सकिन्छ कि पार्टीको पहिलो घोषणा पत्रमा उल्लेखनीय मौलिक बुंदाहरु नेपालमा जनवादी क्रान्ति नहुञ्ज्याल सम्म सही नै छन, यो कुरा ध्रुव सत्य छ । यसै घोषणापत्रलाई पार्टीको वढ्दो अनुभवको आधारमा संवृद्धि गर्नुको सट्टा त्यसलाई संशोधन गर्न थालियो । यहीवाट नै नेपाल कम्युनिस्ट पार्टींमा अन्तर्राष्ट्रीय संशोधनवादको छायाँ पर्न थाल्छ" ( सिंहावलोकन पृ० १२ ) त्यस घोषणा पत्रमा के के लेखिएको थियो र कुन कुन कुरा संशोधन गर्न थाले-पछि ने. क पा, मा अन्तर्राष्ट्रीय संशोधनवादको छायाँ पर्न थाल्छ ? त्यसको विस्तृत चर्चा गरि एको छैन, तै पनि त्यो दस्तावेजमा उल्लेखित एउटा "मौलिख वुँदा" यस प्रकारछ :—"जनवादी मोर्चा र ने. क. पा. ले जनवादी मोर्चालाई निर्माण गर्ने दौरानमा धोखेवाद राजनैतिक पार्टीहरू र गद्दार नेताहरूको विरुद्ध संघर्ष गर्नेछन । उनी हरुको भण्डाफोड गर्नेछन र जनताबाट ती ढोंगी मित्रलाई अलग गर्नेछन, जुनमात्रामा उनीहरुको विरुद्ध संघर्ष गरिने छ, त्यही मात्रामा नेपालमा बास्तविक क्रान्तिकारी तुफान उठने छ ।" ( सिंहावलोकन पृ० ११ वाट उद्धृत) स्पष्ट छ कि "धोखेवाज राजनैतिक पार्टीहरू र गद्दार नेताहरू" भनेर कांग्रेस र त्यसका नेताहरूलाई संकेत गरिएको छ । त्यो वेला जब कि सत्तामा राणशाही थियो तै पनि देशमा पनि देशमा "वास्तविक क्रान्तिकारी तुफान" सत्तामा न भएका गद्दार नेताहरूको नेपालमा "वास्तविक क्रान्तिकारी तुफान" उठाउन उनीहरुको विरुद्धको संघर्षलाई अनिवार्य शर्त मानिएको छ । पछि "बड्दो अनुभवको आधारमा" देशका वामपन्थी ईमान्दार र सच्चा कम्युनिष्ट हरुले त्यो भनाईमा "संवृद्धि" गरे । उनीहरुले ने. का. पूजिपति वर्गको पार्टी हो भन्ने मान्यतालाई हठ शब्दमा अस्वीकार गरेका छन र त्यसलाई दलाल पूजिपति सामन्त तथा विदेशी एकाधिकारको पार्टींको रुपमा विश्लेषण गरेका छन् । उनीहरु अब यो स्पष्ट निश्कर्षमा पुगेका छन कि जनवादी क्रान्तिको उ सहायक शक्ति हुन सक्दैन । तर पी. एल. ले आफ्नै "मौलिक वुँदा" मा संशोधन-गरेर जुन मात्रामा "संघर्ष गरिनेछ" का ठाउँमा एकता गरिने छ भन्ने कुरामा जोड दिनुभएको छ ।

उहाँले आफ्ना कार्यकर्ताहरूलाई यो भ्रमदिने प्रयत्न गरेको पाईन्छ कि उहाँले प्रथम घोषणा पत्रको त्यो मौलिक बुँदामा संशोधन गर्नु भएको छैन र आज पनि ने. का. सित को संघर्षमा पहिले झैं नै जोड दिनु हुन्छ तर होईन, उहां त्यो पहिलो घोषणा पत्रको भनाईबाट धेरै टाढा पुग्नु भएको छ। त्यो कुरा बताउनका लागि थुप्रै प्रमाणहरू छन । उदाहरण का लागि आम चुनाव का बेलामा कम्युनिष्ट पार्टी र ने. का. का चुनाव घोषणा पत्रहरूको "तुलनात्मक अध्ययन"मा उहाँले दुवै पार्टीको एकताले "देशको सामन्ती व्यवस्थालाई खतम गर्न सकिन्छ" भन्ने कुरामा "पुरा विश्वास" प्रकट गर्नु भएको छ। ०१८ सालमा उहाँले पुन: ने. का. सित संयुक्त मोर्चाको अपील गर्नु भएको छ। उहाँले लेख्नु भएको छ, कम्युनिष्ट पार्टी र ने. का. सैद्धान्तिक दृष्टिले एक अर्कावाट भित्र भएपनि संसदीय व्यवस्थाको पुन: स्थापनाको सवालले वर्तमान परिस्थिति मा एक अर्कालाई अति नजिक ल्याई-दिएको छ, अत: यस्तो स्थितिमा संयुक्त मोर्चावाट अलग रही आंदोलनमा सहयोग गर्ने कुरामा मात्र सिमित न रही दुबै पार्टी संयुक्त भई कस्तो खालको संसदीय व्यवस्था ( प्रजातन्त्र ) कसरी ल्याउने भन्ने कुरामा छलफल गरी प्रजातांत्रिक आंदोलन अगाडी बढाउने सवाल नैं आज देशको सर्वोपरी माग भएर आएको छ। यसको निम्ति ने. क. पा. ले ने. का. संग बारम्बार अपिल गर्दै आएको छ, अहिले पनि ने. क. पा. यसैको लागि अपिल गर्दछ" [ ने. का. को समाजवादको विवेचना र आज को परिस्थितिमा हाम्रो कर्तव्य ले. पुष्पलाल, पृ. ८-९ ] के माथीको भनाई प्रथम घोषणा पत्र को "मौलिक बुँदामा" मौलिक प्रकारको संशोधन होईन ? उहाँले खालि संसदीय प्रजातन्त्रको पुन: स्थापनाको सवाल सम्म मात्र होईन, समाजवाद र साम्यवादको "अंतिम लक्ष्य" सम्म उसित त्यस्तो सहयोगको आसा देखाउनु हुन्छ। त्यसका लागि यति भए पुग्छ, ने. का. ले आफूलाई "मजदूर किसानको पार्टी भनेर घोषणा" र समाजवाद र साम्यवाद को "कुरा" गरोस। उसको घोषणा र कुरा भए उहाँलाई पुग्छ। यो कुराको उहाँलाई कुनै मतलब छैन—उसको वर्गचरित्र कस्तो छ ? उसको बास्तविक अभिप्राय के हो ? उसले कुन प्रकारको व्यवहार गर्दछ।

उहाँले लेख्नुहुन्छ, "जे होस ने. का. ले आफूलाई मजदुर किशानको पार्टी भनी घोषणा गर्दै समाजवाद र साम्यवाद देशमा निर्माण गर्नको निम्ति संसदीय प्रजातन्त्रको पुन: स्थापनाको कुरा गर्दछ····भने त झन दुवै पार्टी एक साथमा लागी संसदोय प्रजातन्त्रको पुन: स्थापनाको सवालमा मात्र छलफल नगरी अन्तिम लक्ष्य सम्म कुरामा ब्यापक रूपले छलफल गरी एउटा सही निश्कर्षमा उत्रने धेरै मौका देख्दछ।" [ उही पृ. ९ ] यसरी उहाले सामान्त र दलाल पूजिपति वर्गको कुरा छाडी दिउ, जस्लाई स्वयं: उहाँले पूजिपति वर्गको पार्टी सम्झनुहुन्छ, त्यो

सितअन्तिम लक्ष्य अर्थात् साम्यवाद सम्म एकताको संभावना देख्नु विचित्र कुरा हो। यदि कसैको कुरा वा घोषणाका आधारमा नै कसैप्रति त्यस प्रकारको विचार प्रकट गर्ने हो भने राजासित पनि साम्यवाद सम्म एकताको सम्भावना किन न-देख्ने ? आखिर उस्ले पनि त शोषण विहीन समाजको स्थापनाको कुरा गर्छ। उहाँले ने. का. का विरूद्ध संघर्षको कुरा गर्नु वा उस्लाई दुश्मन [ अथवा मुख्य दुश्मन ] वताउनुलाई प्रजातान्त्रिक आन्दोलनलाई कम्जोर पार्नु वताउनु हुन्छ। उहाँको यो विचारलाई स्वयं: उहाँ कै एउटा अर्को विचारको संदर्भमा हेर्नु राम्रो हुने छ, २००७ साल पछि "ने. का. र कम्युनिष्ट पार्टी भित्र जुन तीव्र संघर्ष चल्यो, त्यसको चर्चा गर्दै उहाँले भन्नु भएको छ,

त्यसको मूख्य कारण "कम्युनिष्ट पार्टीले एकाधिकार पूँजिपतिको विरोध गर्नुको साथै राष्ट्रीय क्षेत्रमा सामन्तको विरूद्ध किसानको पक्षमा आन्दोलन उठाउनु र ने. का. ले साम्राज्यवाद र भारतीय एकाधिकार पूँजिपतिलाई साथ दिंदै उपरोक्त किसानको विरुद्ध र सामन्तको पक्षको नीति अपनाउनाले हो।" ( सिंहावलोकन पृ. २७ )

हिजको त्यो स्थिति मूलत: आज पनि छ, झन बढ़ि र तीव्र रुपमा। कम्युनिष्ट पार्टीले साम्राज्यवाद भारतीय एकाधिकार र सामन्तवादको विरोध गर्छ; ने. का. ले साम्राज्यवाद र सामन्तवादको पक्ष लिन्छ, त्यही आज पनि दुवैको विचको तीव्र संघर्षको "मूख्य कारण" हो। यो तीव्र संघर्षको स्थिति दुइटै अवस्थामा सामान्य हुन सक्छ। प्रथम यात ने. क. पा. ले देशीय वा विदेशी प्रतिक्रियावादी शक्तिहरु सित सम्झौता परस्त नीति अपनाओस; द्वितीय यात ने. का. को उनीहरुप्रतिको नीतिमा सुधार होस्। ने. का. को चरित्रमा सुधार होस। उसको चरित्रमा त्यस्तो सुधार भएको छ भनेर मान्नको लागि कुनै आधार छैन, स्वयं उहाँले पनि त ने. का. अब सामन्तवाद र साम्राज्यवाद विरोधी शक्तिको रुपमा अगाडी आएको छ भन्न सक्नु भएको छैन, अनि ने. का. सित को तीव्र संघर्षको स्थितिलाई सामान्य एउटै सर्तमा बनाउन सकिन्छ। त्यो हो साम्राज्यवाद सामन्तवाद मध्ये दुवै वा एऊटा सितको संघर्षमा नरमि ल्याइयोस, त्यस्को लागि जस्तो कि वहाँले बताउनु हुन्छ. "किसान क्रान्तिलाई तिलाञ्जलि दिने कुरा स्पष्ट शब्दमा उक्त रिपोर्टमा गर्दछन" ( सिंहावलोकन पृ. २७ ) त्यस्को अर्कोपक्ष पी. एल. ले पूरा गर्नु हुन्छ। वहाँले साम्राज्यवाद, विशेषत: भारतीय एकाधिकार सितको संघर्षलाई नरम पार्नु हुन्छ। यसरी ने. का. सितको एकताको पक्षमा देशका आधारभूत हितको तिलाञ्जलि दिईदैंछ।

माझोहरुले द्वितीय महाधिवेशनमा, जस्तो कि "सिंहावलोकन" मा उध्दृत गरिएको छ, भनेका थिए "देशका प्रजातान्त्रिक शक्तिहरुको बीचको फूटले गर्दा नै

गत २००७ सालको क्रान्तिवाट प्राप्त प्रजातान्त्रिक अधिकार प्रतिक्रियावादीका हातमा केन्द्रित हुन पुग्यो ..... ..... ..... अव फुटको फलस्वरूप नै गत क्रान्ति यता आज तक नेपाल कम्युनिस्ट पार्टी र ने० का० विना अर्थ लड्दै आएका छन्, जस्को फायदा प्रतिक्रियावादीहरूले उठाई रहेका छन् । ने० क० पा० र ने. का. विच जुन फुटको आगो सल्काइएको छ, त्यसमा इमान्दारी संग हेर्ने हो भने केही तथ्य पाइने छैन ।" (सिंहावलोकन पृ० २७) वाट उध्दृत, जव कि ने० का० ले दुश्मन वर्गको पक्ष लिन्छ, ने. क. पा. र ने. का. "विना अर्थ लड्दै आएका छन्" भन्ने माझी हरुको भनाईमा इमान्दारी संग हेर्ने हो भने "केही तत्थ्य पाईने छैन।" ठीकै हो कि त्यस प्रकार को विचारका लगि पी० एल० ले उनीहरुलाई "गद्दार नेताहरु" वताउनु भएको छ ।

यही कुरा स्वयं उहाँका वारे पनि लागु हुन्छ । जसरी माझीहरुले कुनैं दिन दुवै पार्टी को वीचको "फुट" उठाई प्रजातन्त्रको विरूद्ध वताएका थिए, त्यही आज उहाँले पनि गर्दै हुनु हुन्छ । ने० का० सितको फूटलाई प्रजातन्त्र विरोधी कुरा र ने० क० लाई दुश्मन सम्झने वामपन्थी कम्युनिष्ट हरूलाई राजावादी वताउनु हुन्छ । यसरी उहाँले ठीक त्यहीवाटो समात्तु भएको छ, जसको लागि माझी हरूलाई गद्दार बताउनु हुन्छ, अनि स्वयं उहाँ कै परिभाषा र कसौटीमा उहाँलाई "गद्दार" नेता किन न भन्ने ?

## — २० —

अठार वर्षको सिंहावलोकनमा उहाँ ले ने० क० पा० को क्रान्तिकारी संघर्ष को इतिहास पेशगर्ने कुरागर्नु भएको छ, तर वास्तवमा त्यो ने० क० पा० को इतिहास होईन, उहाँको आतमपूर्ण हो । झुट को सहायता लिएर तथा सत्य को घाटी निमोठीकन अरू साथीहरू माथी झुटा लाञ्छना लिएर तथा स्वयं आफ्नो मिथ्या आत्मा प्रशम्सा गरेर वास्तवमा वहाँले एउटा पि. एल. पुराणको नै रचना गर्नु भएको छ । कसरी यो खालि पुराण मात्र हो र त्यो भन्दा वढी अरू केही होइन भन्ने कुरा बताउन यो एउटा मात्र उदाहरण दिनु प्रर्याप्त हुनेछ कि त्यसमा पी. एल. र कुनै कुनै ठाउँमा उहाँका लेफ्टीनेन्ट हिक्मत वाहेक अरू कसैको पनि कुनै नामको चर्चा गरिएको छैन—सिवाय आलोचना र गालि । 'सिंहावलोकन'ले उहाँको चरित्रको सबै भन्दा कमजोर गैर सर्वहारा व्यक्तिबादी र अहंवादी नीच पक्षलाई राम्ररी उघारेर अगाडि ल्याई दिए को छ । त्यसले यो पनि बताउँछ कि प्रशंसाको उहाँमा कति धेरै भोक रहेछ र कति तलसम्म उत्रेर उहाँले स्वयं आफनो आत्म-प्रशंसा गर्न सक्नु हुदो रहेछ । तथा उहाँमा ईमानदारी को कति धेरै अभाव रहेछ ?

द्वितीय महाधिवेशनको शिलशिलामा माझीहरूको आलोचना गर्दै लेखिएको

छ, "यी गद्दार हरूले पार्टी महाधिवेशनको फैसलालाई नत कार्यान्वीत गरे, नत पार्टी महाधिवेशनको 'मिनट्स' नै पार्टी साथीहरूका शमक्ष ल्याए।" ( सिंहावलोकन पृ. ३४ ) मिनट्सको अभाववाट उहाँले पुरा फाईदा उठाउनु भएको छ र त्यो महाधिवेशनमा कैयौं यस्ता कुराहरू पास भएको बताउनु भएको छ, जो पास भएका नै थिएनन्। शायद उहाँले सोच्नु हुन्छ कि मिनट्स नभएपछि जे पास भएको थियो भने पनि हुन्छ।

उहाँले लेख्नु भएको छ, कि त्यो महाधिवेशनले "पार्टीको कार्यक्रम नयाँ जनवाद हुनुपर्दछ र कार्यनीति संविधान सभाको चुनावको निम्ति एक्लै भएता पनि संघर्ष गर्नु पर्दछ भन्ने कुरा पास गर्‍यो" ( उही पृ० ३४ ) यहाँ दुइटा कुराको असत्य कुरा विवरण दिएको छ। प्रथम कुनै प्रकारको पार्टी कार्यक्रम यहाँ प्रस्तुतः वा पास भएको थिएन। दोस्रो, संविधान सभाको प्रस्ताव पास भएको थियो, तर एक्लै भएपनि संघर्ष गर्नु पर्दछ भन्ने कुरा पास भएको थिएन, यद्यपि यो कुरा वेग्लै हो कि केन्द्रीय कमिटीका अल्पमत पक्षका साथीहरूको यही स्पष्ट र निश्चित विचार थियो।

महाधिवेशन का निर्णयहरू मुख्यतः यी विषयहरू संग संबंधित थिए :— ( i ) गणतन्त्र ( ii ) संविधान सभा ( iii ) ०१७ सालको क्रान्तिको विश्लेषण ( iv ) संयुक्त मोर्चा। सात सालको क्रान्तिवारे माझीहरूको लाईन नै पास भएको थियो, जसमा भनिएको थियो, ०७ सालको क्रान्तिको देन पनि थियो र त्यसको रक्षा गर्नु पार्टीको तात्कालिक कार्यनीति हुनुपर्दछ। ०७ सालको क्रान्तिको देनको रूपमा संविधान सभाको रक्षा नै पार्टीको तात्कालिक कार्यनीति हुनु पर्छ भन्ने प्रस्ताव सर्वप्रथम माझीहरू द्वारा प्रेषित रिपोर्टमा नै प्रस्तुतः गरिएको थियो। र पछि पी. एल. द्वारा प्रस्तुतः प्रस्तावमा समावेश गरिएको थियो। त्यसरी त्यो बेला संविधान सभाको प्रश्नमा कुनै खास मतभेद थिएन यी महाधिवेशन पछि माझीहरूले त्यो प्रस्तावका विरुद्ध जान थाले पछि मात्र हो कि त्यो प्रश्न बहुमत र अल्मतका बीच तीव्र मतभेदको विषय बन्यो। त्यसबेला मुख्य मतभेद गणतंत्रको विषयमा नै थियो। त्यस विषयमा माझीहरू अल्पमतमा परेका थिए। महाधिवेशन मा पारित प्रश्तावमा भनिएको थियो। "गणतन्त्रको सिद्धान्तलाई सुरक्षित राख्दै विधान सभाका लागि संघर्ष गर्ने। 'सुरक्षित' शब्दको व्याख्या वारे केन्द्रीय कमिटीमा वेग्ला-वेग्लै मतहरू देखापरे। माझीहरूको भनाईअनुसार सुरक्षित शब्दको अर्थ यो हुन्थ्यो कि तत्काल गणतंत्रका विषयमा प्रचार गर्ने सम्म कुरा पनि भविष्यका लागि सुरक्षित राखिएको थियो। सर्व प्रथम केन्द्रीय कमिटीमा त्यही व्याख्याका सिलशिलामा साथीहरू बहुमत र अल्मतमा बाँड़िए।

द्वितीय महाधिबेशनमा नयाँ जनवादी कार्यक्रम पास भएको थियो भन्ने झुटो

कुरा गरेर उहाँले यो भ्रम दिन चाहनु हुन्छ कि उहाँ शुरू देखि नै त्यसका पक्षमा हुनु हुन्थ्यो। यदि आज उहाँ राष्ट्रीय प्रजातन्त्रको पक्षमा भएको भए उहाँले यो लेख्नु हुन्थ्यो कि द्वितीय महाधिवेशनमा उहाँले नयाँ जनवादको कार्यक्रमको विरोध गर्नु भएको थियो। आफ्ना दस्तावेजहरूमा माझीहरू द्वारा प्रस्तुत दस्तावेजका विभिन्न अंशहरू उद्धृत गर्नु भएको छ। निश्चय नै यी बताउन मुश्किल पर्छ, ती पनि वास्तविक हुन वा कपोल कल्पित। यदी द्वितीय महाधिवेशनमा उहाँले नयाँ जनवादको पक्षमा कुनै प्रस्ताव पेश गरेको भए त्यसको कुनै अंश पनि किन पेश गर्न सक्नु भएको छैन ? पार्टी इतिहासको प्रत्यक्ष जानकारी नभएका वा त्यो महाधिवेशनमा भाग नलिएका वा भाग लिएर त्यसको विवरण बिर्सीएकेका साथीहरूलाई वहाँले भ्रम दिन सक्नु हुन्छ। तर त्यो महाधिवेशन प्रत्यक्ष जानकारी भएका साथीहरूका आँखामा यो छिप्न सकेको छैन कि उहाँ कहाँसम्म खुला किसिमले झुटो बोल्न सक्नु हुँदोरहेछ ?

सिंहावलोकामा यो पनि लेखिएको छ, "माझीहरूको विरोधमा रहेका अन्य कामरेडले ( जो द्वितीय महाधिवेशन पछि अल्पमत नै पुकारिन्छ ) पार्टीको प्रथम घोषणापत्रलाई आफ्नो अनुभवको आधारमा संवृद्धि गर्ने कुरामा जोड़ दिए ( उही पृ० २१ ) अल्पमतका माझीहरूको दक्षिणपन्थी झुकाव विरोधी संघर्षलाई प्रथम घोषणापत्र, जस्को प्रतिपादक उहाँले आफूलाई बताउनु हुन्छ, सित जोडेर वहाँले आफ्नो महत्वको प्रदर्शन गर्न खोज्नु भएको छ, सत्य कुरा यो कि त्यो माझी विरोधी संघर्षमा उत्रेका केन्द्रीय कमिटीका अल्पमत साथीहरू वा आम बामपंथी साथीहरूका बीचमा प्रथम घोषणा पत्रको कल्यै कुनै चर्चा सम्म चलेको छैन्।

## – २१ –

दरभंगा प्लेनम बारे पनि साँचो कुरा बताउने शाहस पी. एल. ले गर्नु भएको छैन। अन्तर जोनल सामाञ्जस्य समितिको सर्कुलरमा भनिएको छ, "जहाँ सम्म राजनीतिको सवाल छ, त्यो हामीलाई दरभंगा प्लेनमले दिएको छ। ( सिंहावलोकन पृ. ३१ ) "सिंहाव लोकन" मा त्यो प्लेनमको चर्चा गर्दै लखिएको छ, "शाही हस्तान्तरण पछि दरभंगा प्लेनमले माझी गुटले अपनाएको राजावादी नीतिको विरुद्ध प्रजातान्त्रिक व्यवस्थाको पुनःस्थापनाको निमित्त संघर्ष गर्ने नीति अपनाएको थियो.........अन्तर्राष्ट्रीय पार्टीहरू, जस्को नेतृत्वकाल नव संशोधन वादीहरूको हातमा छ, ले पनि....दरभंगा प्लेनमले लिएको राजनीति सही छ र जनताले आफ्नो अधिकार राजासित अपील गरेर होईन, बल्का संघर्ष गरेर लिनुपर्दछ भनो भनेका थिए" ( उही पृ २१ )

सर्व प्रथम दरभंगा प्लेनमको सही विवरण जान्नु पर्ने आवश्यकताछ। त्यो

वेला केन्द्रीय कमिटीमा तीनवटा दस्तावेज आएका थिए। प्रथम: रायमाझी द्वारा प्रस्तावित त्यसको नारा थियो, संसदीय व्यवस्थाको पुन: स्थापना। केन्द्रीय कमिटी को बहुमत यसका पक्षमा थियो। दोश्रो पी. एल. द्वारा प्रस्तावित नारा, विघटित संशदको पुन: स्थापना। यसका पक्षमा पी. एल. बाहेक तुलसीलाल, शम्भु राम, हिक्मत सिंह र अर्का एकजना साथी हुनु हुन्थ्यो। तेस्रो, मोहन विक्रम सिंह द्वारा प्रइतावित नारा संविधान सभाको चुनाव। त्यसका पक्षमा केन्द्रीय कमिटी-का अन्य कुनै सदस्य थिएनन्। प्लेनमले अत्यधिक बहुमतले संविधान सभाको नारा पासगऱ्यो। तर केन्द्रीय कमिटीले प्लेनमको बहुमतको निर्णयलाइ टुक्राएर माझीहरुको लाइनलाइ नै तत्कालीन नितीका रुपमा पासगऱ्यो।

दरभङ्गा प्लेनमको वहुमतको निर्णय के थियो ? माझी वा पी. एल. दुवै थरले त्यसलाइ कैल्यै पनि प्रकासमा ल्याएनन। उनी दुवैमा यस्तै बोल्सेविक स्प्रीट र इमानदारी थिएन नकि आफ्नो हार वारे सत्य कुरा बताउने नैतिक साहस गरुन। फलत: दुवै थरले प्लेनम वारे गलत र भ्रामक समाचार फैलाउने प्रयत्न गरे। माझीहरुले केन्द्रीय कमिटीमा भएको आफ्नो वहुमतको मात्र चर्चा गरे। पी. एल. हरूले जो दुवैमा अल्पमतमा परेका थिए, भ्रामक कुरा गरेर आफ्नो प्रतिष्ठा वचाउने प्रयत्न गरे।

केलिफोर्निया (अमेरिका) का इन्टर नेशनल स्टडिज आयट युनियनका रिसर्च स्टाफका सदस्य हिमालयन वोर्डर कन्ट्रीज् प्रोजेक्ट का डाइरेक्टर तथा एसीयन सर्वेका सहसम्पादक लियो – ए, रोजले दरभङ्गा प्लेनमवारे लेख्नु भएकोछ "ने. क. पा. भित्रको झगडा, मार्च १९६१ मा दरभङ्गामा सम्पन्न केन्द्रीय कमिटीको गुप्त प्लेनरी सेसनमा गम्भीर चरणमा पुग्यो। त्यसमा पार्टीका चौदह जिल्ला कमिटी र चौवन्न प्रतिनिधिहरूले भागलिएका थिए, यी तुफ़ानी बैठक हरूमा रायमाझी ग्रुपको यो भनाइ थियोकि पार्टीको तत्कालीन उदेश्य यी विषयसम्म सीमित रहनु पर्छ: (i) मौलिक अधिकारको पुन स्थापना ( ii ) राजनैतिक वन्दीहरूको रिहाइ ( iii ) राजनैतिक पार्टीहरूको रोकको वापसी र ( iv ) निकट भविष्यमा संसदको चुनाव। पुष्प-लालको, जस्को समर्थन उत्तर गण्डक ( काठमाण्डू, गोरखा र वन्दिपुर पार्टी संगठनहरुले गरेकाथिए, ले विघटित संशदको पुन: स्थापनाको माग गऱ्यो। तेश्रो सानो गुटले, जस्को नेतृत्व प्यूठान पार्टी यूनिटले गरेको थियो, नया संविधान बनाउन संविधान सभाको चुनाव र साथ साथै गणतान्त्रिक प्रकारको सरकारको स्थापनाको माग गऱ्यो सबै व्यावहारिक विषयहरूमा दोश्रो र तेश्रोगुट नरमपन्थीहरु र माझीगुटका विरुद्ध मिलेकाथिए। ( अध्याय under high atmoshpheric conditions, the Party in Nepal. ले. Leo E. Ros, पुस्तक The communist revolution in Asia, सम्पादक Rcovrt. A Five P. 35 )

माथिका भनाइमा कैयौ गल्तीहरू छन, प्रथम माझीले जुनकुराको माग गरेका थिए, भनिएकोछ, त्यो बेला केन्द्रीय कमिटीले एकमतले पासगरेका नाराहरू (नयाँ संसदको चुनावको मागलाई छाडेर ) थिए माझीको नारापहिले भने संसदीय प्रणालीको पुनः स्थापना थियो। दोश्रो पी. एल. को लाइनलाई जुन काठमाण्डू ( पाटन पनि–लेखक ) गोरखा र वन्दिपुरका संगठनहरूले समर्थन गरेकाथिए भनिएकोछ, त्यो सत्य होइन। ती जिल्लाका केन्द्रीय कमिटीका सदस्यहरूले नै त्यो लाइनको समर्थन गरेकाथिए, जब कि ती जिल्लाका पार्टीहरूको प्रतिनिधित्व गर्ने अत्यधिक बहुमत प्रतिनिधिहरू तेश्रोलाइनका पक्षमा थिए तेश्रो, संविधान सभाको समर्थन गर्ने साथीहरूको ग्रुप सानोथिएन। त्यसले प्लेनमको अत्यधिक बहुमतको प्रतिनिधित्व गरेको थियो, त्यो यहाँको नेतृत्व न कुनै जिल्ला पार्टीले गरेको थियो, नव्यक्ति विशेषले।

संविधान सभाको प्रश्नलाइ लिएर तेश्रो माहाअधिवेसन पछी देखिने माझी हरुको विरुद्ध अल्पमतका साथीहरूले संघर्ष गर्दै आएका थिए, पार्टी भित्र त्यसका पक्षमा तलसम्म बहुमत थियो। त्यो मतको नेतृत्व यथार्थमा पी. एल. लेनै गर्नुहुन्थ्यो, ने. का. ले विघटित संसद जस्मा उसको बहुमत थियो र वि. पी. प्रधानमन्त्री थिए को पुनः स्थापनाको नारा दियो। पछि पी. एल. शंभुराम हरुले संविधान सभाको नारालाई उग्र वामपन्थी भनेर छाडेर ने. का. को नै अनुकरण गरे। अनिपार्टी भित्र संविधान सभा को त्यो संघर्ष बिना कुनै नेताको नेतृत्व नै अगाडी बढ्यो। त्यो संघर्ष एक प्रकारले तल्लो तहका सवै वामपन्थी कार्यकर्ताहरू-को सवै पुराना नेताहरूका विरुद्धको संघर्ष थियो। जस्मा नेताहरू प्रो. कांग्रेस र प्रो. राजा गुटमा बाँडिएका थिए भने आम कार्यकर्ताहरू राजा वा कांग्रेसको कुनै पनि प्रकारको पिछलग्गूपनका विरुद्ध थिए। जे होस्, त्यहाँ प्रथम पल्ट पार्टी-का वामपन्थी कार्यकर्ताहरूले यो प्रमाणित गरे कि प्रथम नेताहरू प्रतिको आम कार्यकर्ताहरूको आस्था र विश्वास त्यो बेला सम्म नै कायम रहन सक्दथ्यो, जब-सम्म उनीहरुले सही बाटो समात्दथे, दोश्रो, यदि पार्टीका मानिएका नेताहरूले अवशरवाद र गद्दारीको वाटो समाते। उनीहरू ( कार्यकर्ताहरू ) स्वयं पनि अगाडी बढ्न सक्दथे। वास्तवमा त्यहाँ पार्टीका सबै मानिएका नेताहरू आम कार्यकर्ताहरूका अगाडी पराजित भएका थिए। दरभंगा प्लेनमले कार्यकर्तामा भएको अत्यधिक जागरूकतालाई बताउँछ। वास्तवमा त्यो जागरूकता नै पार्टीको त्यो सम्पत्तिहो, जस्का वलमा पार्टीका सवै जसो नेताहरुले अवसरवादी नेताहरुले संशोधनवाद र गद्दारीको वाटो समात्नुका बावजुद आजपार्टी जीवित छ।

वहाँले दरभंगा प्लेनम को राजनीतिमा 'सहीराजनीति'को चर्चा गर्दा यो अन्तर गर्नु भएको छैन, उहाँको संकेत कुन राजनीति तर्फ हो केन्द्रीय कमेटीको बहुमत

द्वारा पारित राजनीति वा प्लेनमको बहुमत द्वारा पारित राजनीति। उहाँहरुको प्रस्ताव कतैतिर बाट पनि पास भएको थिएन। त्यसकारण उहाँले दरभंगा प्लेनमको राजनीति भनेर जस्को चर्चा गर्नुहुन्छ, त्यो उहाँ द्वारा प्रस्तावित राजनीति अवश्य पनि होईन। त्यो अवस्थामा उहाँले चर्चा गरेको राजनीति या त माझी गुटको राजनीति हो, वा आम कार्यकर्ताहरूको पहलकदमीमा पारीत राजनीति, अर्थात् संविधान सभाको राजनीति। यो प्लेनमको बहुमत द्वारा स्वीकृत भएको भए पनि केन्द्रीय कमिटी को बहुमत द्वारा अस्वीकृत गरिएको थियो, त्यो पृष्टभूमिमा उहाँले बारम्बार माथीको अन्तरलाई स्पष्ट गरिकन दरभंगा प्लेनमको राजनीति भनेर जुन चर्चा गर्नु हुन्छ त्यसले माझीहरूको राजनीतिलाई नै बताउँछ, अर्थात संसदीय प्रजातन्त्रको पुनः स्थापनाको राजनीति। यो आश्चर्यको कुराहो कि माझीहरूको बारम्बार आलोचना गर्दा गर्दै पनि उहाँले उनीहरूको राजनीतिलाई सही घोषणा गरीरहनु भएको छ।

पी. एल. ले लेख्नु भएको छ, दरभंगा प्लेनमले माझी गुटले अपनाएको राजबादी नीतिको विरूद्ध प्रजातान्त्रिक व्यवस्थाको पुनस्थापना निम्ति संघर्य गर्ने नीति अपनाएको थियो।" सत्यकुरा त्यो भन्दा केही बढता वा वेग्लैछ, दरभंगा-प्लेनमले माझी गुटले अपनाएको राजावादी तथा पी एल. गुटले अपनाएको कांग्रेस-वादी नीति—दुवैका विरुद्ध संघर्ष गर्ने नीति अपनाएको थियो। पुरा यसरीस्पष्ट शब्दमा अगाडी आउनु पर्दथ्यो, तर खालि प्रजातान्त्रिक व्यवस्थाको पुनः स्थापना कुरा उठाएर उहाँले चुपचापसित आफुले उठाएको विघटित संसद (जस्मा कांग्रेसको बहुमत थियो, वि. पि. प्रधानमन्त्री थिए र, त्यसैले जो, त्यसवेला कांग्रेसको पनि राजनैतिक नारा थियो ) को पुनस्थापनाको प्रसंगलाई चुपचापसित पार्टीको इतिहासबाट मेटीदिन खोज्नु हुन्छ। त्यो उहाँमा भएको राजनैतिक ईमान्दारी र नैतिक वलको अभावको ज्वलन्त उदाहरण हो। दरभंगा प्लेनममा पछि बनारस महाधिवेशनमा पनि उहाँको कांग्रेस परस्त चरित्र नांगो रूपमा अगाडी आएको थियो। यदि त्यो वेलाको आफ्नो राजनीतिलाई सही नै सम्झनु हुन्छ भने उहाँले त्यसलाई समर्थन गर्नु पर्दथ्यो, गलत संझे आत्मालोचना, तर उहाँले ती दुवै मध्ये केही पनि गर्नु भएको छैन।

तृतीय महाधिवेशन सम्बन्धि चर्चाले बताउँछ—उहाँले कहाँ सम्म निर्लज्ज भएर असत्य बोल्न सक्नु हुँदो रहेछ? कथित नयाँ जनवादी कार्यकामको भूमिकामा उहाँले लेख्नु भएको छः तेश्रो महाधिवेशनमा "तुलसीलालको नेतृत्वमा राष्ट्रीय प्रजातन्त्र नामक संशोधनवादी कार्यक्रम का. पुस्पलाल, का० हिक्मत तथा अन्य साथीहरूको कड़ा विरोधको वावजूद पास भयो।" हो, तेश्रो महाधिवेशनमा टि. एल. तथ पि. एल. का बीचमा मतभेद भएको थियो, तर विवाद नयाँ

जनवाद वा राष्ट्रीय प्रजातन्त्रको प्रश्नमा रहेको थिएन । विवाद यो कुरामा थियो– तत्काल कुन नारा दिने ? अर्को शब्दमा विवाद कार्यं नीतिको प्रश्नमा थियो। टि. एल. ले सर्वसत्ता सम्पन्न संसदको नारा अगाडि ल्याउनु भएको थियो भने पि. एल. ले दरभंगा प्लेनममा आफुले दिएका नारालाई नै दोहोऱ्याउनु भएको थियो—विघटित संसदको पुनः स्थापना । टि. एल. को त्यो नारालाई संशोधवादी भनेर बताइसक्नु भएको छ। सामान्यतः उहाँको भन्दा टि. एल.को नारा बढि गण-तन्त्रको पक्षमा थियो किनभने उहाँले संविधान बनाउने अधिकार राजाका हातबाट जनताका हातमा आउनु पर्छ भन्नेकुरामा जोड दिनु भएको थियो । त्यस्को विप-रीत पि एल. ले यस्तो संसदकोमाग गरि रहनु भएको थियो, जस्को गठन राजा-द्वारा प्रदत्त संविधान अन्तर्गत भएको थियो र जस्को अन्त भई सकेको थियो। त्यसरी वहाँले राजाको संविधान बनाउने निरंकुश सत्तालाई मानेर नै आफ्नो राजनीति अगाडी ल्याई राख्नु भएको थियो । त्यो अवस्थामा सोझै यो निष्कर्षमा पुग्न सकिन्छ कि उहाँले झन दुइ कदम अगाडी बढेर नै संशोधनवादी कार्य नीति पेश गर्नु भएको थियो र त्यही उहाँको टि. एल. का साथको मतभेदको कारण थियो। स्वयं वहाँका दस्तावेजहरूबाट थाहा हुन्छ, महाधिवेशनमा उहाँ कार्यक्रम सम्वन्धी विवादबाट तटस्थ रहन चाहनु भएको थियो र त्यस विषयमा तटस्थ रहनको लागि सबै सित अपिल गर्न भएको थियो । त्यसरी पछि तटस्थतावादको जुन तीव्र आलोचना उहाँले आफ्ना दस्तावेजहरूमा गर्नु भएको छ, त्यस्को सुत्रा-धार उहाँ नै हुनु हुन्छ, त्यो बेला उहाँले जनवाद सन्वन्धि कुनै कार्यक्रम अगाडि नल्याई कन तटस्थ रहनुको पछाडिको उद्देश्य डाँगेहरुको समर्थनबाट वंचित हुने खतराबाट बच्नु थियो, जो त्यो वेला उहाँहरुलाई प्राप्त थियो। जब पछि स्पष्ट रुपमा यो थाहा भयो कि 'उनीहरूको समर्थन रायमाझी वा रि. एल. लाई मात्र प्राप्त हुन सक्छ, उहाँहरुलाई होइन, बल्ल 'मूलबाटो' अगाडि आयो । 'सिंहावलो-कन' मा लेखिएको छ, "तेस्रो महाधिवेशन बोलाउनको उद्देश्य स्पष्ट छ। दरभंगाको प्लेनमले दिएको राजनीतिलाई कार्यान्वित गर्दा त्यस बखतको नेतृत्व बाधक भएको हुदा त्यस्लाई बदली अर्को नेतृत्वको गठन गर्नु" ( पृष्ट ६२ ) यदि माझीहरूको राजनीतिलाई नै डहाँले त्यही राजनीति भन्नु भएको होइन भने दरभंगा प्लेनमले दिएको राजनीति भनेको के हो ? प्रथम यसबारे नै उहाँले स्पष्ट रूपमा केही बताउनु भएको छैन । दोस्रो प्लेनमको राजनीति भन्नाले माझीहरुले केन्द्रीय कमिटीमा बहुमत द्वारा पारित राजनीति होइन, प्लेनमको बहुमतबाट पारित राजनीति नै आउँछ। त्यो पनि संशोधनवादी प्रभावबाट मुक्त थियो भन्न सकिन्न, किनभने त्यो संसदीय प्रकारका राजनीतिको घेरा भित्र नै बन्द थियो । तैापनि त्यस्का कम से कम दुइटा पक्ष स्पष्टः थिए त्यो पार्टीलाई राजा वा कांग्रेसको पिछलग्गू बना-उने कुरामा विरुद्ध लक्षित थियो । तेस्रो महाअधिवेशनले माझीहरुको नेतृत्वलाई

हटाउने नकारात्मक कार्य पूरा गऱ्यो तर दरभंगा प्लेनमले दिएको राजनीतिको मूल स्प्रीट, जसको मुख्य विशेषता थियो, कॉंग्रेस परस्त र राजा परस्त दुवै भड्काबका विरुद्ध संघर्ष गर्दै पार्टीको स्वतन्त्र भूमिकामा जोड दिनु, लाई विश्व कम्युनिस्ट आंदोलनमा देखापरेको नयाँ सैद्धान्तिक विवाद तथा सोभियत संशोधनवाद विरोधी संघर्षका प्रकाशमा अगाडि बढाउन सकेन ।

## — २२ —

'सिंहावलोकन'मा लेखिएको छ "हामीले केवल त्यस्ता व्यक्तिहरूको सदस्यताको नविनीकरण गर्नु परेको छ जस्ले निम्न लिखित ४ शर्तलाई स्वीकार गरी **हामीलाई केन्द्र मानी** काम गर्न राजी हुनेछन् ।

"अन्तर्राष्ट्रीय कम्युनिश्ट आंदोलनमा जुन मतभेद देखा पर्न आएको छ— त्यसमा स्पष्ट रूपले आधुनिक संशोधनवादको विरोध गर्ने र चीनको कम्युनिस्ट पार्टीले मार्क्सवाद लेनिनवादको शुद्धताको निम्ति पेस गरेको पच्चीस सूत्रीय कार्यक्रमको समर्थन गर्ने"

"आजसम्म प्रकाशित भएका खुला वा छद्मभेषी संसोधनवादी कार्यक्रमको विरोध गर्ने र **नया जनवादी कार्यक्रम जुन का. पुष्पलाल सहित ६ जना** कामरेडहरुले **प्रकाशित गरेका छन् त्यस्लाई समर्थन गर्ने ।" "का. पुष्पलाल सहित ६ जना कामरेडहरूले नयाँ जनवादी क्रान्तिको भिन्न र विरोधी शक्तिहरूको लेखाजोखा गरेको र नयाँ जनवादी कार्यक्रमलाई प्राप्त गर्ने बाटो भनि लेखिएका दस्तावेजहरुलाई स्वीकार गर्ने"** जोड मेरो लेखक ।

"पार्टिमा जनवादी केन्द्रियतालाई मानि काम गर्ने" ( ९४-९५ )

पार्टी सदस्यताको नवीनीकरणका लागि उहाँले जुन थप शर्तहरू राख्नु भएको छ त्यस्ले गर्दा देश भित्र र बाहिर लामो समय देखि काम गर्दै आएका ती सारा कम्युनिस्टहरू कम्युनिस्ट नरहने भए जस्ले तथा घोषित "हामी"लाई "केन्द्र मानी" काम गर्न "राजी" छैनन्; जो "का. पुष्पलाल सहित ६ जना कामरेडहरू" द्वारा प्रस्तुत विचार धारा 'स्वीकार' गर्न तयार छैनन् । यो घोषणाले यो बताउँछ कि नेपालमा कम्युनिजमको व्याख्याको ठेक्का 'का. पुष्पलालाई सहित ६ जना कामरेडहरू, लाई प्राप्त छ । **यो हद दर्जाको धृष्टता हो । नाङ्गो प्रकारको** दावावाद हो । अहं वादको निर्लज्ज प्रदर्शन हो । व्यक्तिवादीताको चरम रूप हो । नेतृत्वको भोकको ज्वलन्त उदाहरण हो । आधुनिक युगमा पोपवादको पुनः स्थापना हो ।

माथी ठुला अक्षरका केही वाक्यहरूले पनि सार रूपमा प्रस्तुत दस्तावेज

हरूको वास्तविक राजनैतिक उद्देश्य उहाँको कांग्रेस परस्त राजनीति र फुट परस्त संगठन नीति माथि राम्ररी प्रकाश ल्याउँछ। तेश्रो शर्तवारे केही विस्तृत रूपले चर्चा गर्न पर्ने आवश्यकता पनि छ। त्यहाँ दुइटा कुराहरूको उल्लेख गरिएको छ। प्रथम, मित्र र विरोधी शक्तिहरूको लेखा जोखा, दोश्रो नयाँ जनवादी कार्यक्रमलाई प्राप्त गर्ने वाटो। दोश्रो शर्तमा "नयाँ जनवादी कार्यक्रम" को उल्लेख गरिएको छ। तेश्रो शर्तका बुँदाहरू स्वतः त्यसभित्र आउँछन्। अनि पुनः तिनै कुराहरू माथि दोहोर्‍याएर जोड दिनु पछाडीको अर्थ के हो ?

नयाँ जनवादी क्रान्तिका "विरोधी र मित्र शक्तिहरू" प्रकरणमा लेखिएको छ, "पूँजिवादी जनवादी पक्षमा उभिने नेपालको पूँजीपति वर्ग तथा अन्य निम्न पूँजिवादी वर्ग र मजदूर किसान बीचको अन्तर्विरोधहरू आज गौण अर्थात सामान्य भएर गएका छन्।" (कार्यक्रम पृ०-५९) आश्चर्य हो कि विरोधी र मित्र शक्तिहरूको लेखा जोखा गर्दा ने० का० को कतै चर्चा छैन। तैपनि कुरा प्रष्ट छ। उहाँ ले ने. का. लाई "नेपालको पूँजिपति वर्गको पार्टी" वताउनु भएको छ। त्यस कारण उँहाले त्यो वर्गवारे जो भन्नु भएको छ, त्यो स्वत त्यस्को पार्टी ने. का. वारे पनि लागु हुन्छ। माथिको भनाई द्वारा उहाँले दुइटा कुरा वताउन खोज्नु भएको छ। प्रथम, ने का. पूँजिवादी जनवादी पक्षमा उभिने शक्ति हो, दोश्रो, ने. का. सितको अन्तर्विरोध गौण अर्थात सामान्य हो। उहाँले आफ्नो कथित "कार्यक्रमलाई प्राप्त गर्ने वाटो" वारे अभिमान पूर्वक लेख्नु भए को छ। "नयाँ जनवादी कार्यक्रमले पार्टीको कार्य नीति कस्तो हुनु पर्छ भनी एक छुट्टै अनुच्छेद लेखेको छ" (सिंहावलोकन, पृष्ट-५७) तर त्यो अनुच्छेद पढेपछि थाहाहुने छ कि उहाँको न कुनै तत्कालीन कार्यक्रम छ, न कार्यनीति नै।

माओ-त्से-तुङ्गले "संयुक्तसरकार वारे" लेखमा पार्टीको सामान्य कार्यक्रम अर्थात रणनीति स्पष्ट गरि सकेपछि लेख्नु भएको छ, "उपरोक्त सामान्य कार्यक्रम-का आधारमा प्रत्येक खास खुडकिलोकोलागि एक विशेष कार्यक्रम हुनु पर्छ। धेरै दशक सम्म जान सक्ने वुर्जुवा प्रजातान्त्रिक क्रांतिको दौरान भर हाम्रो नयाँ जनवादको सामान्य कार्यक्रममा कुनै हेरफेर छैन। तर यस खुड्किलोको भिन्ना-भिन्नै पाइलामा स्थितिहरू वदलिनुका साथसाथै हाम्रा खास खास कार्यक्रमहरूमा पनि हेरफेर हुनु स्वाभाविकै छ।" त्यस पछि तात्कालिक कार्यक्रम वा खाश कार्य-क्रम दिइएको छ, जस्मा मागहरूको लामो सूची र संयुक्त सरकारको नारा छ। तर पी. एल. ले यस्तो कुनै कुराको उल्लेख गर्नु भएको छैन।

उहाँले वर्तमान सरकार र शासन प्रणालीलाई खतम गर्न चाहनु हुन्छ वा तत्काल त्यसैका अन्तर्गत जन आन्दोलन उठाउन चाहनु हुन्छ ? पछिल्लो अवस्थामा उहाँले त्यस्ता माँगहरूको सूची दिनु पर्थ्यो पहीलो अवस्थामा वैकल्पिक सरकारको

रूप र त्यसको तात्कालिक कार्यक्रम, तर वहाँले दुई मध्ये कुनै गर्नु भएको छैन । एउटा नैराजतिक पार्टीले तात्कालिक सरकारको रूपवारे नै न वोल्नु आश्चर्यको कुरा हो । नयाँ जनवादी सरकारको स्थापना रणनीतिको परिधि भित्र आउने कुरा हो, तत्काल प्राप्त हुन सक्ने कुरा होइन ।

उहाँले लेख्नु भएको छ, "पञ्चायती व्यवस्था संग अन्तर्विरोध राख्ने वर्ग तथा वर्गीय स्तरहरूलाई एकावद्ध गरि क्रान्तिको पक्षमा उपयोग गर्ने कार्य नीति पार्टीले लिनु पर्छ ।" त्यस्तो कार्यनीति के हो त ? त्यो "एकावद्ध" कुन तत्कालीन कार्यक्रम वा नाराको पूर्तिका लागि पार्ने हो ? पुरै परिच्छेद चूप छ । त्यसरी कार्यनीतिमा एउटा महत्वपूर्ण कुरा छुटन गएको छ । त्यो हो उहाँको कुनै तात्कालिक कार्यक्रम वा नारा छैन, कमसे कम कथित नयाँ जनवादी कार्यक्रममा त्यस्को उल्लेख गरिएको छैन तर त्यस्को अर्थ उहाँको कुनै तात्कालिक कार्यक्रम वा नारा छैन भनेर निस्कर्ष निकाल्नु गल्ती हुने छ ।

दरभंगा पलेनम र वनारस महाधिवेशनमा उहाँले स्पष्टतः कांग्रेसको तत्कालीन नारालाई नै आफ्नो नाराको रूपमा स्वीकार गर्नु भएको थियो—विघटित संसदको पुनः स्थापनाको नारा । त्यसले गर्दा उहाँको कांग्रेस परस्त चरित्र नाङ्गो रूपमा अगाडी आयो र उहाँ नराम्ररी बदनाम हुनु भयो । दरभंगा र बनारसमा वहाँको नराम्रो हारका पछाडि यही कारणले काम गरेको थियो । तिनै वामपन्थी कार्यकर्ताहरू जस्को नेता वन्नको लागी उहाँले द्वितीय महाधिवेशनमा गणतन्त्रको नारा समात्न आई पुग्नु भएको थियो, उनीहरूले नै उहाँको बहिस्कार गरे । त्यसपछि उहाँका अगाडी दुइटै विकल्प थिए—काँग्रेसको पछि लाग्न छोडेर स्वतन्त्र नीति अपनाएर अगाढी पढने वा तत्कालीन कार्यक्रम वा नारावारे चूप रहेर व्यवहारमा चुपचाप सित काँग्रेसी वाटोमा हिडदै जाने । वहाँले पछिल्लो तरिका अपनाउनु भयो ।

वर्तमान पंचायती व्यवस्थालाई खतम पारेर उहाँले जे प्राप्त गर्ने उद्देश्य राख्नु हुन्छ त्यो हो कांग्रेसी सरकार तथा संसदीय प्रणाली अन्तर्गत प्राप्त हुने 'प्रजातन्त्र' त्यसरी 'उहाँको कार्यक्रम' नयाँ जनवादी छ; त्यस्लाई प्राप्त गर्ने वाटो कांग्रेसी छ ।

अब यो कुरा जान्न वाँकि रहन्न : सदस्यताको नविनीकरणको विशेष शर्तको रुपमा । 'नयाँ जनवादी कार्यक्रम'को उल्लेख गरि सके पछि पुनः त्यस भित्रका दुइटा शर्त माथि दोहोऱ्याएर जोड दिनुका पछाडीको उहाँको चाल के रहेछ ? अर्थात उहाँले खालि तिनै व्यक्तिहरुलाई मात्र लिएर कम्युनिष्ट पार्टीको गठन गर्न चाहनु हुन्छ, प्रथम, जस्ले ने. का. लाई मित्र शक्ति सम्झन्छन्; दोश्रो, जस्ले कांग्रेसको तत्कालीन कार्यक्रम वा नारालाई स्वीकार गर्छन् ।

माझीको राजावादी भड़काबका विरुद्ध पार्टीका वामपन्थी कार्यकर्ताहरु वर्षौं देखि संघर्षरत थिए। उनीहरु, अर्कातिर, काँग्रेसको पिछलग्गुपनका पनि विरुद्ध थिए। जब माझीको नेतृत्वलाई चुनौति दिने स्थिति अगाडी आयो, पी. एल. ले यो देखाउनु भयो कि उहाँको वर्षौं देखिको माझीहरुका विरुद्धको संघर्षको उद्देश्य दक्षिण पन्थी भड़काबका विरुद्धको संघर्ष त्यति थिएन, जति एउटा कांग्रेस परस्त कम्युनिष्ट पार्टीको निर्माण। दरभङ्गा तथा बनारस महाधिवेशन दुबैमा उहाँले त्यस्का लागि गरेको प्रयत्न असफल भै सकेको थियो। त्यो अवस्थामा उहाँले यो सोच्नु भयो कि कम्युनिष्ट पार्टीमा फुट नापारिकन उहाँका लागि त्यस्तो पार्टीको गठन संभव छैन जस्ले मित्रको रुपमा उस्को आलोचना गरे पनि यथार्थमा जस्ले ने. का. को पूरक संगठनको रुपमा काम गरोस। गोरखपुर सम्मेलन त्यस्को परिणाम थियो।

तेश्रो महाधिवेशन द्वारा निर्वाचित केन्द्रीय कमिटीको विसर्जन एएपछि सबै वामपन्थी पार्टी कमिटी र छितरिएका साथिहरुका बीचमा कोअर्डिनेशन गरेर सच्चा, क्रान्तिकारी र मार्क्सवादी लेनिनवादी पार्टीको निर्माणको आवश्यकता थियो। देशभित्र त्यस्कालागी प्रयत्न पनि भैरहेको थियो। त्यो अवस्थामा एउटा सच्चा वामपन्थी पार्टी अस्तित्वमा आउँथ्यो, तर वहाँले चिताए जस्तो कांग्रेस परस्त पार्टीको गठन संदिग्ध थियो। त्यसकारण उहाँले माथि देखि तलसम्म पार्टी-लाई टुक्राउनु भयो। पार्टीको इतिहासमा उहाँको नाम सधैं नै सब भन्दा ठूलो पार्टीलाई टुक्राउने व्यक्तिको रुपमा याद गरिने छ। उहाँले तिनै व्यक्तिहरुलाई मात्र लिएर नयाँ पार्टीको निर्माण गर्ने काम सुरु गर्नु भयो, जो उहाँले राखेका कांग्रेस परस्त शर्तहरु मान्न तैयार छन्। उहाँले देश भरका 'हामी'' लाई ''केन्द्र मानी'' काम गर्न ''राजी'' नहुने लामो ईतिहास भएका डी. सी. हरूलाई टुक्राउने तथा देश भित्र कठीन र प्रतिकूल परिस्थितिमा कामगर्दै आई रहेका साथी-हरूलाई राजावादी, ईलाकावादी र तटस्थवादी भन्दै वदनाम गर्ने अभियान जस्तै चलाउनु भयो।

उहाँको त्यसप्रकारको भूमिका को चर्चा गर्दै ने. क. पा. ले ''नेपाल कम्युनिष्ट-पार्टी भित्र देखा परेका भड्काबहरू ''मा लेख्दछ: पी. एल. ले पार्टीको केन्द्रीय कमिटीको विछिन्न अवस्था भएपछि एउटा मार्क्सवादी, लेनिन बादी र माओवादी विचारधारा भएका एउटा नेताले देशको यस्तो कठीन स्थितिको घडीमा कसरी पार्टीलाई एक सूत्रमा बाँधी मार्क्सवादी लेनिनवादी र माओ विचार धाराले लेस भएको सम्पूर्ण व्यक्तिहरूलाई कसरी एकै सूत्रमा बाँधी पार्टी लाई सुदृढ र सुसंगठित बनाउने तर्फ कामेरहरू संग परा मर्श लिनु को बदला मौका छोपी अधैर्य भई फुट परस्त नीति लाई नाम मात्रको गोरखपुर तृतीय संमेलन गरी पार्टीलाई

टुक्रयाउन पट्टी लागे।"

"आज पी० एल० द्वारा प्रकाशित पुस्तक र वुलेटीनहरुको मूल्य धार पार्टी को निर्माण को सट्टा झन छिन्न भिन्न पार्ने, काम्रेडहरूलाई एकता वद्ध पार्नुको सट्टा झुठा लाञ्छनाहरु प्रसारित गरी चरित्र हत्या गर्ने, जिल्ला जिल्लामा काम्रेड हरू पक्राउन पट्टी षडयन्त्र गर्न सक्रिय हुने, निर्माण र नेतृत्वको सही विकाशको सट्टा पूंजिवादी मनोवृत्तिको अनुरूप आफ्नै व्यक्ति वादी, अहं वादी नेतृत्व लादने प्रवृत्तिहरू देखिदै आएको छ"। ( राज नैतिक दस्ता वेजहरू, पृष्ठ ६७ )

अगाडी लेखिएको छ, "पहिले पी. एल. जति राय माझी को गद्दारी माथि विरोध दर्शाउन अगुवा थिए अहिले आएर यी तमाम यहाँ को कार्य विधिले गर्दा घुमेर राय माझी को नजिक पुगेका छन्।

"मार्क्सवाद लेनिन वाद र माओ विचार धारा मान्ने कर्मठ इमान्दार काम्रेड हरूलाई मार्क्सवाद लेनिनवाद र माओ विचार धाराको छद्म भेषी अनुहार लिएर आफ्नो व्यक्तित्व को फायदा उठाई आफ्नो पहिले संपर्कमा रहेका साथी हरू लाई भ्रममा पारी तान्दै आफै फँसेका दल दलमा फसाई मार्क्स वाद लेनिन वाद देखि धेरै पर हुत्याई रहेका छन्" ( उही पृष्ट ६८ ) *

## – २५ –

डी. पी. अधिकारीले लेख्नु भएको छ, "अवसर वाद को कुनै राज नैतिक चरित्र न हुदा यसको खास दृष्टिकोण समेत रहेको हुन्न त्यसैले राय माझीको दृष्टिकोणलाई सदैको राजा पन्थी भनी नामाकरण गर्दा उसमा निहीत कोरा औसर वादलाई चिन्ने कुरामा अर्को भूल हुन सक्छ...."

"यहाँ यो पनि स्पष्ट रहोस् राय माझीको औसर वाद पार्टी भित्र होस् वा बाहिर शक्ति सन्तुलनवाट आफुले व्यक्तिगत फाइदा उठाउने दिशा तर्फ रहदै आएको छ। प्रजातान्त्रिक शक्तिको तुलनामा राजालाई केही दृढ देख्ना साथ अभिनन्दन पत्र चढाउन उ जसरी पुग्यो फेरि तुरन्तै भद्र अवज्ञा आन्दोलनमा प्रजातान्त्रिक शक्ति अगाड़ि बढेको देख्ना साथ आफुलाई राजाको विरुद्ध देखाउने उसको भर प्रयत्न रह्यो" ( राय माझीको औसखादिता र नेपाल कम्युनिष्ट पार्टी, ले. डी. पी. अधिकारी पृ० २–३ )

डी. पी. ले लेख्नु हुन्छ, "औसर वादको पनि निश्चय नै आफ्नो एउटा कला हुन्छ" ( उटी पृ. ९ ) त्यस्तो कलामा स्वयं वहाँ पनि कोही भन्दा पछाड़ि

* वीचका २३ र २४ अध्यापका कागज हरू हराएकाले पछि भेटिएका वेलामा परिशिष्टका रूपमा दिइने छन्।

हुनु हुन्न वा रहनु भएको थिएन। माझीको दक्षिण पन्थी औसर वादको वहाँ लामो समय संम सिद्धान्तकार र व्याख्याकार रहनु भएको छ। त्यस कारण माझी वारे वहाँ ले जे बताउनु भएको छ त्यसलाई आधिकारिक भन्न सकिन्छ। पछिका घटना हरूले वहाँ को भनाई लाई झन वढी सही साबित गरेका छन्। राजाको शक्ति वढेको वेलामा ने. का. सित को विरोधमा नै वहाँ ले वढी जोड दिनु भएको थियो भने अव वहाँ ले ने. का. सितको घनिष्टताको नीति अपनाउदै गई राख्नु भई रहेको छ।

अधिकारीले राय माझी वारे जे लेख्नु भएको छ त्यो पी. एल. वारे पनि लागु हुन्छ। वहाँ को अवसर वादिता "पार्टी भित्र होस् वा वाहिर शक्ति सन्तुलन वाट व्यक्तिगत फाइदा उठाउने दिशा तर्फ रहदै आएको छ।" यी शब्दमा वहाँ को अवसरवादी चरित्र को संक्षिप्त र सरल व्याख्या हुन सक्छ।

उहाँको ऐले संमको इतिहास खास गरेर द्वितीय महाधिवेशन देखि को इतिहास जस वारे हामीलाई वढी राम्ररी ज्ञान छ, द्वारा त्यो कुरा प्रमाणित हुन्छ। द्वितीय महाधिवेशन का समयमा गणतन्त्रको प्रस्तावको पक्षमा उहाँ त्यसका पक्षमा कार्यकर्ताहरूको बहुमत देखे पछि मात्र आउनु भएको थियो। त्यस पछि संविधान सभाको प्रश्न लिएर अन्तर पार्टी संघर्ष सुरू भयो। पौष १ गतेको घटना पछि ने. का. ले विघटित संसदको पुनःस्थापनाको नारा दियो। त्यो वेला कांग्रेसी क्षेत्रमा यो आम धारणा थियो कि भारतीय मद्दत द्वारा ०७ सालमा झैं उनीहरू तुरुन्तै सत्ता कब्जा गर्न सफल हुनेछन्। पी. एल. ले ने. का. को पक्षलाई वलियो देख्नु भयो र संविधान सभाको नारा छोडेर विघटित संसदको नारा दिन पुग्नु भयो। पार्टी भित्र पनि उहाँको कहिल्यै कुनै खास र विशेष मत रहेको छैन। जब जब कहाँले पार्टीका अधिकतर कार्यकर्ताहरूको कुनै खास विचार वा दिशातिर झुकाव रहेको पाउनु हुन्छ, उहाँले त्यही पक्ष लिएर आफ्नो स्थिति दृढ पार्ने प्रयत्न गर्नु हुन्छ। उहाँ जति सजिलो सित गणतन्त्रवादी हुनु भयो त्यति सजिलो सित राजा वादी पनि हुन सक्नु हुन्थ्यो, जति सजिलोसित प्रो-चाइनिज हुनुभयो त्यति सजिलो सित "प्रो-रसियन" पनि हुन सक्नु हुन्थ्यो। यो छिपेको कुरा होइन कि उहाँले अन्तसंम डागेहरूको आशिर्वाद प्राप्त गर्ने प्रयत्न गर्नुभएको थियो। जब त्यो रेडमा उहाँद राय माझी र टी. एल. भन्दा पछाडि पर्नुभयो अनि मात्र उहाँले आफुलाई 'माओवादी' घोषित गर्नु भएको थियो। अब उहाँले ती दुवै भन्दा वेग्लै वाटोको अनुकरण गर्दै हुनु हुन्छ।

यदि रायमाझी राजावादी र पी. एल कांग्रेसवादी हुन पुग्नुभयो भने त्यसको कारण यत्तिमात्र रह्यो आ आफ्नो समझदारी अनुसार एउटाले ने. का. लाई र

अर्कोले राजाई वलियो शक्ति संझेका थिए। पछिल्लाको ने. का. सितको, मुख्यत: त्यसका उच्चस्तरीय नेताहरू सितको निकट संबन्ध पनि उहाँको त्यस प्रतिको पिछलग्गुपनको एउटा खास कारण वन्न गयो। आज वाहिरवाट हेर्दा राजाको पक्का विरोधी देखिने पी. एल., जव २०१९ सालमा ने. का. राजासितको सिधा भिडन्तमा पराजित वनेको थियो र ने. का. का तुलनामा राजा वलियो देखिएको थयो, उहाँले राजाका पक्षमा कैयौं विचारहरू प्रकट गरेको पाइन्छ, जसको पहिले नै चर्चा भई सकेको छ। शंभूरामले दरभंगा संम कांग्रेसको शक्तिलाई मजबूत देख्नु भएको थियो र त्यस वेला त्यसैको पिछलग्गु वन्नु भएको थियो, जब कि पछि उहाँले आफ्नो सोचाईमा "पुनर्विचार" गर्नुभयो र राजाको पक्षलाई वलियो ठान्न पुग्नुभयो। शक्ति संतुलनवाट फाइदा उठाउने अवसरवादी स्वभाव अनुसार पहिले गणतन्त्रवादी शंभूराम राजावादी वन्दै जानुभयो।

टी. एल. ले पी. एल. को त्यस प्रकारको चरित्रको व्याख्या गर्दै लेख्नु भएको छ, "जुन वेला ने. का. वाट संघर्षको संभावना थियो त्यस वेला का. पी. एल. को विश्लेषण को केन्द्र ने. का. थियो। त्यस वेला का. पी. एल. को प्रयास पूंजिवादी पार्टीलाई देशको राजनैतिक निर्णायक शक्तिमानी सो पार्टीलाई मान्य राजनीति नै हाम्रो राजनीतिको रूपमा लिने तर्क पेश गर्नु हुन्थ्यो···तर अहिले ने. का. अशक्त भई निस्क्रियवसेको वेला का. पी. एल. को विश्लेषणको केन्द्र राजा हुन आएको छ। का. पी. एल. ले राजालाई यता उतीको आलोचना गर्दा गर्दै पनि राजाको प्रतिक्रियावादी चरित्रलाई छोपी उसलाई राष्ट्रवादी सार्वभौमिकताको रक्षक, प्रजातन्त्रको भावनाले युक्त र साथै अन्तराष्ट्रीय समाजवादी खेमाको वड्दो तागत द्वारा प्रभावित भएको व्यक्तिको रूपमा पेशगर्नु भएको छ ····।

"उहाँको भनाईको तात्पर्य यो पनि हुन आउछ कि समाजवादी राष्ट्रसंघको जुन प्रभाव नेपालमा छ त्यसबाट राजा मुक्त छैन। अर्थात् समाजवादी राष्ट्रसंघको प्रभावले गर्दा राजाको विदेश नीतिले झन झन प्रगतिशील रूप लिंदैजानेछ ( जनवादी क्रांति या संशोधनवाद ? ले० तुलसीलाल पृष्ठ ८ )"

माथिको भनाईमा तथ्यको केही तोड़-मोड़ गरिएको छैन भन्न सकिन्न तै पनि यो तथ्य हो कि 'मूलवाटो' मा उहाले राजाको आर्थिक तथा वैदेशिक नीति ०७ साल देखि गठन हुँदै आएका विभिन्न सरकारहरूको भन्दा "मूलत: भिन्न न भै मात्रामा मात्र फरक" भएको कुरा स्वीकार गर्नु भएको छ।

'मूलवाटो' मा उहाले राजाका समर्थनमा प्रकट गरेका विचारहरू "ने. का. असक्त भै निस्क्रिय वसेका वेला" राजाका पक्षमा विशेष रूपले अनुकूल विचार

प्रकट गरेको कुरा स्पष्ट हुन्छ। कुनै खास परिस्थितिमा उहाँले ने. का. लाइ राजनीतिक दृष्टिकोणले कमजोर हुँदै गएको देख्नु भयो भने आफ्नो आजको कांग्रेस पक्षिय चरित्रलाइ पुनः अर्को मोड दिन पुग्नु भयो भने त्यो आश्चर्यको कुरा हुने छैन। यो तथ्यलाइ न बुझी, डि. पि. ले राय माझीका बारेमा भने झैं उहाको दृष्टिकोणलाई सदैको कांग्रेसी पक्षो भनी नामाकरण गर्दा उहाँमा "निहीत कोरा औसरबादलाइ चिन्ने कुरामा अर्को भूलहुन सक्छ"।

## – २६ –

आज देशमा कतिपय यस्ता छद्म कम्युनिष्ट संगठनहरु छन् जस्ले मार्क्सवाद-लेनिनवाद र माओ-त्से-तुङ्ग विचारधाराको कुरा गर्छन्, तर व्यवहारमा जसले त्यसका विरूद्ध ईमान्दार वामपंथी साथीहरूमा भ्रम उत्पन्न गर्ने मार्क्सवादी लेनिनवादी पार्टीको संगठनमा वाधा पुऱ्याउने तथा प्रतिक्रियावादी राजनीतिमा सघाउ पुराउने काम गर्दछन्, यहाँ सम्म कि माझीहरू सम्मले "प्रो चाइनिज" कम्यूनिष्ट-पार्टीको गठन गरेका छन्। कतिपय अमेरिकन भारतीय वा नेपाली सि. आइ. डि. हरुले ठाउँ-ठाउँमा उग्र वामपन्थी वा नक्सलाइड ग्रुपहरूको संचालन गरी रहेको कुरा पनि छिपेको छैन। यस्ता विभिन्न प्रकारका छद्मवादी संगठनहरु मध्ये पी. एल गुटको स्थान प्रमुख छ। अरू छद्मवादी तत्वहरूले भन्दा उहाँले वढता संख्यामा इमान्दार वामपन्थी कार्यकर्ताहरुलाइ भ्रममा हाल्न वा उनीहरूलाई कांग्रेसी (मुलवाटो) मा हिडाल्न सफल भै रहनु भएको छ। उनीहरुलाई उहाँले यसरी भ्रममा हाल्न सक्नुको कारण के हो?

प्रथम, उहाँ पार्टीको एउटा संस्थापक सदस्य हुनु हुन्छ र त्यसले गर्दा उहाँको एउटा व्यक्तित्व वनेको छ। आफ्नो पार्टी जीवनमा उहाँले प्रायः दुःख, गरीबी, निर्वासन र अण्डरग्राउण्ड जीवन विताउनु परेको छ। सैद्धान्तिक भन्दा पनि त्यस कारणले पार्टीका साथीहरुमा उहाँ प्रति सहानूभूति र आदर भावना पाइन्छ। दोश्रो, देशमा निम्न पूँजिवादी तत्वको अधिकता छ, त्यसको सिधा असर पार्टीको आन्तरिक जीवनमा नै पर्दछ। यी तत्वहरूको एउटा विशेषता यो हो कि उनिहरू जैले पनि कुनै न कुनै व्यक्तिलाइ केन्द्र बनाएर घुम्न चाहन्छन् त्यै प्रवृतिले गर्दा एकातिर देशमा निरंकुश शासनलाई वल पुग्दछ भने अर्कातिर त्यस्तै तत्वको अधिकताले गर्दा खेरी पार्टी भित्र व्यक्ति पूजाको प्रवृति जोडदार हुन्छ। सर्वहारा दृष्टिकोणको विकास पछि यस्तो प्रवृत्ति हटेर जान्छ। पी. एल. को तरीका सुरू देखिनै यस्तो निकै पूँजिवादी प्रवृत्तिलाई प्रोत्साहन दिने नै रहदै आएको छ, सुद्ध गर्ने हैन। । यो प्रवृत्तिको परिणाम हो कि पार्टीका साथीहरूमा कुनै न कुनै व्यक्तिलाइ केन्द्र मानेर काम गर्ने प्रबृत्ति रहदै आएको छ। त्यो प्रबृत्तिवाट उहाँले राम्ररी फायदा

उठाउनु भएको छ। पार्टीका धेरै जस्तो पुराना नेताहरूले गद्दारीको वाटो समाती सके पछि वाँकी रहेका हरूको झुट्टा आरोप र लान्छना द्वारा चरित्रहत्या गरी पी. एल. ले यो भ्रम दिने प्रयत्न गर्नु भएको छ कि आज देशमा खाली वहाँ एक जन-मात्र यस्तो व्यक्ति रहनु भएको छ जसलाई सवै कम्यूनिष्टहरूले 'केन्द्र'को रूपमा स्वीकार गर्नु पर्छ यस प्रकारको व्यक्ति पूजाको लागी पी. एल. गुटका साथीहरु यती नांगो प्रकारले दीक्षित र तयार पारिएका छन् कि उनीहरुले पार्टी सदस्यता-को नविनिकरणको लागी 'हामी'लाइ–यस्ले स्पष्ट: पि. एल. लाइ वताउछ ''केन्द्र मानी काम गर्ने'' भनि लेखिएका हास्यास्पद सर्तहरुलाइ पनि स्वीकार गर्न हिचकिचा-उन्नन्। तेश्रो, हाम्रा देशमा साथीहरुको चेतनाको स्तर अत्यन्त निम्न छ। त्यस-वाट पनि उहाँले निकै फाइदा उठाउनु भएको छ, यो कुरा उहाँले तयार पारेको 'सिंहावलोकन' मा पार्टी इतिहासको जुन किसिमले तोड-मोड गर्नु भएको छ त्यसवाट प्रष्ट हुन्छ।

चौथा, आज पि. एल. को जुन प्रभाव वाँकी रहेको छ, त्यो मुख्यत: पार्टीको नकारात्मक अवस्थाको परिणाम हो। कम्यूनिष्ट पार्टीको केन्द्र विहीन अवस्था, अस्त व्यस्तता, स्पष्ट राजनिती लाइनको अभाव आदिले गर्दा नै वहाँले स्वयम्लाई ''केन्द्र'' घोषित गरी वढी भ्रम उत्पन्न गर्न सक्नु भएको छ। पाचौं, सामान्यत: सोभियत संशोधनवाद र भारतीय एकाधिकार विशेषत: ने. का. ले नेपालका सच्चा वामपन्थी कम्यूनिष्टका विरुद्ध पी. एल. लाइ प्रत्यक्ष वा अप्रत्यक्ष तरीकाले विशेष समर्थन गरीरहेका हुन्छन्। त्यसले पनि उहाँको संगठनलाई वल पुगीरहेको छ। राजा र कांग्रेस दुवैको विरोध गरेर स्वतन्त्र क्रान्तिकारी भूमिका पुरा गर्ने कुरा धेरै नै कस्ट साध्य र कठीन कुराहो। त्यसकारण तीततत्वहरुले ने. का. ले सफलता प्राप्त गरे पछि वा ऐले पनि उस्को शक्तिको आडमा छिटै नै फाइदा उठाउन चाह-न्छन्, उनीहरू क्रमस: पी. एल गुटमा सामेल हुंदै गैरहेका छन्। छैटो, आज प्रसासनले जति २ नांगो प्रकारले भारतीय एकाधिकारसित नाङ्गो प्रकारले साँठ-गाँठको नीति अपनाउदैं गैरहेको छ त्यतिनै पि. एल. गुटलाई ''प्रो.चाइनिज'' तत्व र विचारधाराका विरूद्ध अप्रत्यक्ष प्रकारले प्रोत्साहन दिने नीति अपनाउदै गै-सकेको छ।

माथीका सवै कारणहरुको संयुक्त परिणाम स्वरूप नै पी. एल. गुटको संगठन केही वलियो जस्तो देखिन्छ। तर यो मुख्यत: वाह्य पक्ष हो र आन्तरिक रूपमा उनिहरुको आधार कमजोर छ त्यसकारण त्यसलाई बढी महत्व दिने आवश्वश्यता छैन। यो स्थितिको चर्चा गर्दै ने. क. पा. ले 'नेपाल कम्युनिष्ट पार्टी भित्र देखा परेका भडकाउहरुमा लेख्दछ।

''रायमाझी, डि. पि., टि. एल. पि. एल. ( साथै एस० आर० पनि—

लेखक ) मूलतः एउटै बाटोमा गैराखेका छन्-संसोधन वाद र अवसर बादको बाटामा । आज देशमा वामपंथी शक्तिहरू भन्दा प्रतिक्रयांवादी शक्तिहरू मजबूद छन् । त्यसैले मुख्यतः बामपंथी शक्तिहरू छिन्न भिन्न र असंगठित भएकाले संशोधन वादी र अवसरबादी शक्तिहरू मजबूद जस्ता देखिन्छन् । तर सबै प्रतिक्रया बादी शक्तिहरू कागजी बाघ हुन त्यसैले उनीहरूका वलमा उभिने संशोधन बादी र न संशोधन बादी, गद्दारहरूको शक्ति पनि फोक्से मासुहो । त्यस्को प्रकृति मुख्यतः न कारात्मक छ । आज सच्चा वामपंथी हरूका बीचमा एकता न भएकाले, उनी-हरूको केन्द्र न भएकाले, उनीहरूको कार्य क्रम र राजनीतिक लाइन न भएकाले र उनीहरू संघर्षवाट विमुख भएकाले— उनीहरू ( अवसरबादीहरू ) वढ़न पाए का छन् तर हामीहरूले केन्द्र राजनीतिक लाइन र संघर्ष गर्न थाले पछि स्थितिमा अनुकूल परिवर्तन हुनेछ । उनीहरुको राजनीति र संगठन नीति मुलतः गलत छ, त्यसकारण उनीहरुको हार निश्चित छ । निश्चय नै व्यवहारिक रुपले हामीले विरोधीहरुको शक्तिलाइ कम आँक्न हुन्न । प्रत्येक सैद्धान्तिक राजनैतिक वा संगठनात्मक संघर्षलाइ कुशलता पूर्वक चलाउनु पर्छ । सबैगलत भडकावहरुले पार्टीलाइ क्षति पुऱ्याउछन् तर तिनीहरुले पुनः पार्टीको खरावीलाइ स्पस्ट रूप दिएर तथा पार्टीबाट अलग गरेर पार्टीलाइ मदत पनि पुराउछन् । त्यास्ता भड-काव हरूको विरोधको सिलसिलामा पार्टीको एकता बढछ र मजबूत हुन्छ ।"
( राजनैतिक दस्तावेज हरू पृष्ट···· ···· )

●•●